





# वार्षिक कार्यक्रम संचालन कार्यविधि

२०७५/०७६



प्रदेश सरकार

## उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय

प्रदेश नं. ५, बुटवल




सचिव

# विषयसूची


| क्र.सं. | शिर्षक | | पेज नं. |
|---|---|---|---|
| १. | परिच्छेद १ | परिचय | १-३ |
| २. | परिच्छेद २ | वन | ४-२० |
| ३. | परिच्छेद ३ | वातावरण तथा जलवायू | २०-२८ |
| ४. | परिच्छेद ४ | विज्ञान तथा प्रविधि | २९-३० |
| ५. | परिच्छेद ५ | पर्यटन | ३१-३७ |
| ६. | परिच्छेद ६ | उद्योग | ३८-४४ |
| ७. | परिच्छेद ७ | वाणिज्य तथा आपूर्ति | ४५-४६ |





सचिव

## परिच्छेद-१

## परिचय

### १.१ पृष्ठभूमि :

यो कार्यविधि उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय; वन निर्देशनालय; उद्योग, वाणिज्य तथा उपभोक्ताहित संरक्षण निर्देशनालय; वन अनुसन्धान तथा प्रशिक्षण केन्द्र; भू तथा जलाधार व्यवस्थापन कार्यालय; डिभिजन वन कार्यालय तथा घरेलु तथा साना उद्योग कार्यालय/घरेलु तथा साना उद्योग विकास समितिबाट संचालन हुने वार्षिक क्रियाकलाप संचालनका लागि मार्गदर्शनको रुपमा तयार गरिएको छ। सवै कार्यालयहरुले कार्यक्रम संचालन गर्दा यस कार्यविधि वमोजिम कार्यक्रम संचालन गर्नुपर्नेछ। यस कार्यविधिका निर्देशक सिद्धान्तहरु देहाय बमोजिम रहेका छन् :

- यस कार्यक्रम अन्तर्गत सञ्चालन गरीने क्रियाकलापहरुको लागि आवश्यक स्थान छनोट तथा व्यवस्थापन गर्ने कार्य सम्वन्धित कार्यालयले स्थानीय तह तथा सरोकारवाला निकायसँगको समन्वयमा गर्नुपर्नेछ । अन्य सार्वजनिक तथा सरकारी जग्गा प्रयोग गर्ने हो भने प्रचलित ऐन नियम तथा कानुनले तोकेको मापदण्ड पुरा गर्नुपर्नेछ ।
- संचालित क्रियाकलापहरुलाई थप प्रभावकारी वनाउन सम्वन्धित स्थानीय तह तथा स्थानीय सरोकारवालाहरुसंग समन्वय र सहकार्य गर्न सकिनेछ ।
- कार्यविधिमा उल्लेखित प्रावधानहरु कार्यक्रम सञ्चालनको क्रममा प्रचलित ऐन नियमलाइ आधार मान्नुपर्नेछ ।
- कार्य सञ्चालनको लागि जिम्मेवारी पाएको पक्षहरुले मन्त्रालय र मातहतको निकायहरु संग भएको सम्झौता वमोजिम कार्य गर्नुपर्नेछ । तोकिए भन्दा फरक काम गरी लागत ईष्टिमेट र डिजाइन भन्दा परक पर्न गएको खण्डमा भुक्तानी गर्न वाध्य हुनेछैन ।

### १.२ परिभाषा

विषय वा प्रसंगले अर्को अर्थ नलागेमा, यस कार्यविधिमा,

क. "कार्यविधि" भन्नाले प्रदेश सरकार, उद्योग पर्यटन वन तथा वातावरण मन्त्रालय अन्तर्गतका वार्षिक कार्यक्रम कार्यान्वयन गर्नको लागि उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयवाट स्वीकृत कार्यविधीलाई सम्झनुपर्छ ।

ख. "मन्त्रालय" भन्नाले प्रदेश सरकार, प्रदेश नं. ५, उद्योग, पर्यटन वन तथा वातावरण मन्त्रालयलाई सम्झनुपर्छ ।

ग. "सम्वन्धित निकाय वा कार्यालय" भन्नाले मन्त्रालयद्वारा कार्यक्रम सञ्चालन गर्न तोकिएको सरकारी निकायलाई सम्झनुपर्छ ।

घ. "महाशाखा" भन्नाले उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालयको महाशाखा सम्झनुपर्छ ।




सचिव

ङ. "कार्यालय" भन्नाले उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय अन्तर्गतका कार्यालयहरु सम्फनुपर्छ ।

च. "स्थानीय तह" भन्नाले कार्यक्रम लागु हुने स्थानको उपमहानगरपालीका नगरपालिका वा गाउँपालिका सम्फनुपर्छ ।

छ. "उद्योग" भन्नाले प्रचलित कानून वमोजिम कामकारवाहि गर्न पाउने गरी औद्योगिक व्यवसाय ऐन, २०७३ वमोजिम दर्ता भई संचालन भएका उद्योगलाई सम्झनुपर्छ ।

## १.३ कार्यक्रम संचालन विधि :

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय र मातहतका निकायहरुबाट चालु आ.व. २०७५/७६ मा सम्पन्न गर्नुपर्ने कार्यक्रमका लागी प्रदेश सरकारबाट ब.उ.शि.नं. ७०५३४३५१ मा चालुगत खर्च तर्फ रु. २९५००००००/- र पुँजीगत खर्च तर्फ रु. १०५२५६००००/- विनियोजन भएको छ । कार्यक्रमहरु संचालन गर्नका लागि मन्त्रालय र मातहतका निकायहरुमा कार्यरत जनशक्ति, अन्य मन्त्रालय तथा सरकारी निकायका जनशक्तिका साथ साथै आवशयक मात्रामा सेवा प्रदायकबाट समेत सेवा लिइ गरिनेछ । यी कार्यक्रमहरु सम्पन्न गर्नका लागि प्रचलित कानूनको अधिनमा रहि देहाय वमोजिम संचालन गर्न सकिने छ ।

- स्वीकृत वार्षिक कार्यक्रमको विषयगत विशिष्टिकरण र आवश्यकतानुसार कर्मचारीहरुमा जिम्मेवारी तोक्ने र कार्यविभाजन गर्ने ।
- क्रियाकलापहरुको प्रकृतिको आधारमा क्षेत्र निरिक्षण गरी लक्षित समूह, कार्यक्रम सञ्चालन हुने क्षेत्र, स्थानीय तहमा बैठक, छलफल र आवश्यकतानुसार अन्तरक्रिया र गोष्ठी जस्ता परिचयात्मक कार्यक्रम संचालन गरी कार्यक्रम संचालन हुने स्थानको पहिचान गर्ने ।
- पहिचान भएको कार्यक्रमको प्राविधिक र उपभोक्ताहरुको सामाजिक आर्थिक संभाव्यता अध्ययन आवश्यकतानुसार गर्ने ।
- विषयसँग सम्वन्धित प्राविधिकबाट कार्यक्रमको विस्तृत सर्वेक्षण, डिजाइन तथा लागत अनुमान तयार गर्ने ।
- सीपयुक्त जनशक्ति आवश्यक पर्ने कार्यक्रम अवधिको लागि सेवा/व्यक्ति करारमा लिएर गर्ने ।
- अध्ययन सम्वन्धि प्रतिवेदनहरुको कम्तिमा कार्यकारी सारांश नेपाली भाषामा हुनुपर्ने ।
- लागत अनुमान तयार गर्दा संघीय मन्त्रालयहरु, आर्थिक मामिला तथा योजना मन्त्रालय प्रदेश नं. ५ बाट तयार भएको स्विकृत नर्मस र जिल्ला दररेटको आधारमा गर्ने ।
- लागत अनुमानमा देहायका विषयहरु पनि समावेश गर्ने ।

  - कार्यक्रमको शिर्षक
  - कार्यक्रम संचालन हुने स्थान
  - कार्यक्रमको डिजाइन, नक्शा, भौतिक इकाई, परिमाण, प्रति इकाई लागत र कूल लागत अनुमान




सचिव

– श्रोत साझेदारीको व्यवस्था

- कार्यक्रम संचालनको निम्ति तयार गरिने प्रस्तावमा देहायका विषयहरु स्पष्ट खुलाउने :

  – कार्यक्रमको नाम
  – कार्यक्रमको पृष्ठभूमी
  – कार्यक्रमको लक्ष्य र उद्देश्य
  – कार्यक्रम संचालन हुने स्थान वा क्षेत्र
  – लक्षित समूह सम्वन्धी विवरण, लाभान्वित घरधुरी/जनसंख्या
  – कार्यक्रम संचालन विधि र प्रकृया
  – कार्यक्रम संचालन गर्न लाग्ने लागत र समय
  – अपेक्षित उपलब्धीहरु
  – अनुगमन तथा मूल्यांकन

## १.४ कार्यक्रम कार्यान्वयन विधि :

यसमा उल्लेख भएका कार्यक्रमहरु प्रचलित कानूनको अधिनमा रही तपसिल अनुसार संचालन गर्न सकिनेछ ।

- कार्यालयका कर्मचारीबाट कार्यक्रम संचालन गर्ने
- उपभोक्ता समूह/समितिबाट संचालन गर्ने
- सेवा प्रदायक संस्थाहरुबाट सेवा खरिद गरी संचालन गर्ने
- निर्माण व्यबसायीबाट संचालन गर्ने

## १.५ कार्यक्रमको अनुगमन तथा मूल्यांकन विधि :

- कार्यक्रमको प्रस्ताव तथा संझौता अनुसार कृयाकलापको संबन्धित निकायबाट नियमित रुपमा अनुगमन गरी पृष्ठपोषण दिने
- कार्यक्रम सम्पन्न भए पश्चात सार्वजनिक परिक्षण गर्ने
- कार्य सम्पन्न प्रतिवेदन तयार गरी संबन्धित निकायमा पेश गर्ने




सचिव

# परिच्छेद २

# वन

**१.वन कर्मचारी तालिम, वन संरक्षण सम्बन्धी गोष्ठी**

वन संरक्षण सम्बन्धी तालिम, गोष्ठी गरी कर्मचारीहरुमा वन संरक्षण प्रति जिम्मेवार बनाउने, क्षमता अभिवृद्धि गर्ने, टिम विल्डिङ्ग विकास गर्ने उदेश्यले यो कार्यक्रम संचालन गरिनेछ ।

- सम्बन्धित निकायबाट यस कार्यक्रमको प्रस्ताव, लगत इष्टिमेट तयार गरी स्वीकृत गर्ने,
- मन्त्रालय/मातहतका कार्यालयहरुबाट सहभागी माग गर्ने,
- विज्ञ प्रशिक्षकहरु मार्फत कार्यक्रम संचालन गर्ने,
- कार्यक्रम संम्पन्नताको प्रतिवेदन तयारी गर्ने ।

**२. वनस्पति संरक्षण तथा उद्यान विकास**

यस कार्यक्रमबाट वनस्पति उद्यानको अवधारणा तथा संरचना संबन्धी क्रियाकलापहरु संचालन गरिनेछ ।

- संबन्धित निकायले वनस्पति अनुसन्धान केन्द्र बाँके सँग समन्वय गरि कार्यक्रमको प्रस्ताव तयार गर्ने, लागत अनुमान तयार गरी स्वीकृत गर्ने,
- विस्तृत परियोजना प्रतिवेदन तयार गर्न पनि यो कार्यक्रमबाट खर्च गर्न सकिने,
- उद्यानमा इथनोवोटानिकल, एक्जोटिक, फोलोरल, थिमेटिक, फिजिक गार्डेन लगायतका संरचनाहरु तयार गर्ने,
- कार्यक्रम सम्पन्न भए पश्चात सवै कृयाकलापहरु खुल्ने गरी प्रतिवेदन पेश गर्ने ।

**३. उष्ण प्रदेशका महत्वपुर्ण जडिवुटीको खेती प्रविधि विकास : सर्पगन्धा, कुरीलो, पिपला**

- संबन्धित कार्यालयले जडिवुटी खेती प्रविधिको विकासका लागि स्थान छनौट गर्ने,
- कार्यक्रम संचालनका लागि सम्बन्धित विज्ञहरुको सहयोग लिने,
- अनुसन्धान स्थलमा तिन वटै जडिवुटीका लागि फरक फरक अध्ययन प्लट स्थापना गरी डाटा संकलन गरी प्रतिवेदन तयार गर्ने ।

**४. एक जिल्ला एक जडिवुटी खेती कार्यक्रम (जडिवुटी पकेट क्षेत्र विशेष)**

संवन्धित कार्यालयले सरोकारवालाहरुको सहयोगमा जिल्लामा प्रशस्त मात्रामा उपलब्ध हुने वा हुन सक्ने एक जडिवुटी प्रजाती पहिचान गरी उक्त प्रजातीको संरक्षण तथा खेतीको लागि आवश्यक कृयाकलाप संचालन गरिनेछ ।

- यो कार्यक्रम समूह, कृषक वा सहकारी मार्फत संचालन गर्ने
- प्रजाती तथा स्थान छनौट भए पश्चात कार्यक्रमको प्रस्ताव, लागत अनुमान तयार गर्ने,
- यो शिर्षकमा विनियोजित बजेट विरुवा उत्पादन, खरिद, ढुवानी, रोपण, संरक्षण, कोचिङ्ग लगायतका कार्यहरुमा खर्च गर्न सकिने,

सचिव



- समूह, कृषक वा सहकारीसँग संझौता गरी आवश्यक प्राविधिक सेवा उपलब्ध गराउने,
- नियमित अनुगमन गर्ने, कार्यक्रम सम्पन्न भए पश्चात प्रतिवेदन पेश गर्ने,
- सरोकारवालाहरुको सहभागितामा जिल्ला विशेष जडिवुटीहरु निम्न आधारमा पहिचान गरिनेछ :
  - ✓ प्रदेश भित्रका पहाडी जिल्लाहरुमा विशेष गरेर टिमुर, तेजपात, काउलो, सुगन्धवाल, कुरिलो, गुर्जो, श्रीखण्ड, रुद्राक्ष, सिलटिमुर, ओखर, जंगली सयपत्री, लौठसल्ला, जैतुन, केशर, सुगन्धकोकिला, अमला आदि जस्ता जडिवुटी हुनुपर्ने ।
  - ✓ प्रदेश भित्रका तराईका जिल्लाहरुमा विशेष गरेर हर्रो, वर्रो, अमला, कुरिलो, सर्पगन्धा, मेन्था, क्यामोमाइल, अश्वगन्धा, निम, विजयसाल, कालमेघ, मुस्ली आदि जस्ता जडिवुटी हुनुपर्ने
  - ✓ जिल्लामा विगतका दिनहरु देखि नै ब्यापारमा आएको जडिवुटीलाई विशेष प्राथमिकता दिनुपर्ने
  - ✓ जिल्लामा ब्यवसायिक रुपमा खेती भएका जडिवुटीलाई विशेष प्राथमिकता दिनुपर्ने
  - ✓ उच्च मुल्य तथा उपयोगका हिसावले महत्वपुर्ण जडिवुटी हुनुपर्ने

**५. औद्योगिक तथा पर्यटकीय प्रयोजनका लागि कबुलियति वन विकास तथा प्रवर्धनका लागि संभाव्यता अध्ययन**

- संबन्धित निकायले कार्य शर्त (Terms of Reference-TOR) तयार गर्ने,
- सूचना प्रकासन गरी सेवा प्रदायक छनौट गर्ने, संझौता गर्ने,
- छनोट भएका सेवा प्रदायक मार्फत १२ वटै जिल्लामा संभाव्यता अध्ययन गर्ने,
- सेवा प्रदायकले संभाव्यता अध्ययन पश्चात प्रस्तुतीकरण गरी प्रतिवेदन मस्यौदा पेश गर्ने,
- सुझावहरु समेटी अन्तिम प्रतिवेदन पेश गर्नुपर्नेछ ।

**६. कबुलियति वन सुधार कार्यक्रम**

यो कार्यक्रम अन्तरगत हस्तान्तरण गरिएका कबुलियती वनहरुको हैसियतमा सुधार गर्दै उपभोक्ताहरुलाई आय आर्जन गर्ने खालका कार्यक्रमहरु जस्तैः जग्गा विकास, फलफुल रोपण, अमृसो रोपण, घाँस तथा डालेघाँस रोपण, बारबेरा आदि कृयाकलापहरु संचालन गरिनेछ ।

- डिभिजन वन कार्यालय मार्फत यस कार्यक्रम संचालन गर्न मातहतका कर्मचारीलाई कार्यादेश दिने,
- प्रचलित नर्मस् अनुसार लागत अनुमान तयार गर्ने, स्वीकृत गर्ने र कार्यक्रम संचालन गर्ने,
- अनुगमन निरीक्षण सम्बन्धित निकायबाट गर्ने,
- कार्यसम्पन्न भए पश्चात गरिएका कृयाकलाप, उपलब्धी, लाभान्वित घरधुरी, फोटो उल्लेख गरी प्रतिवेदन पेश गर्नुपर्नेछ ।

**७. कबुलियति वन समूह परिचालन तथा क्षमता अभिवृद्धि**

- कबुलियति वन समूहका सदस्यहरुलाई लेखा तथा अभिलेख व्यवस्थापन, वचत तथा ऋण परिचालन, नेतृत्व विकास लगायतका क्षमता अभिवृद्धि कृयाकलापहरु संचालन गरिनेछ ।
- कार्यक्रम सम्पन्न भए पश्चात गरिएका कृयाकलाप, उपलब्धी, फोटो समावेश गरी प्रतिवेदन पेश गर्ने ।

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय प्रदेश सरकार प्रदेश नं.५ बुटवल, नेपाल

सचिव

### ८. चक्ला वन व्यबस्थापन

सरकारद्वारा व्यबस्थित चक्ला वनमा स्वीकृत वैज्ञानिक वन व्यबस्थापन कार्यविधि, स्वीकृत कार्ययोजना तथा प्रचलित नर्मस् बमोजिम कार्यक्रम संचालन गरिनेछ । वन पैदावार उत्पादन गर्ने र राजश्वमा वृद्धि गर्ने योजना सहित डिभिजन वन कार्यालय मार्फत यो कृयाकलाप संचालन गरिनेछ ।

- कार्यक्रम संचालनका लागि आवश्यक पर्ने मानवश्रोत, प्राविधिक सहयोग र परामर्श सेवाका लागि डिभिजन वन कार्यालयमा कार्यरत मानवश्रोतबाट वा सेवाप्रदायकबाट लिन सकिने,
- रुख छपान, लगत संकलन, कटान, घाटगद्दि गर्ने प्रकृया प्रचलित नियम र निर्देशिका अनुसार गर्ने,
- मन्त्रालय, वन निर्देशनालय र डिभिजन वन कार्यालयबाट नियमित अनुगमन गर्ने,
- नियम अनुसार काठ, दाउरा विक्रि वितरण गर्ने ।

### ९. जडिवुटी खेती प्रवर्धन कार्यक्रम

यस प्रदेशमा जडिवुटीको सम्भावनालाई मध्यनजर गरी पकेट क्षेत्र विशेष जडिवुटी बिरुवाहरु उत्पादन गर्ने, बृहत रुपमा जडिवुटी खेती गर्ने र बैकल्पिक आयश्रोतको विकास गर्ने उद्देश्यले यो कार्यक्रम संचालन गरिनेछ । जडिवुटी खेती प्रवर्द्धनका लागि यस क्षेत्रका सरोकारवाला तथा विज्ञहरुसँग समन्वय गरी प्रवर्द्धनका क्रियाकलापहरु संचालन गरिनेछ । जडिवुटीको उत्पादन्त व्यवसाय तथा प्रशोधनका लागि सार्वजनिक, निजी साझेदारी (PPP) तरिकालाई प्राथमिकता दिइनेछ । व्यवसायिक खेती भैरहेका तथा आशातित उत्पादन बढाउन नसकिएका मेन्था, क्यामोमाइल लगायतका सुगन्धित वनस्पतिका लागि गुणस्तरीय बिउ विजन उपलब्धता तर्फ उचित ध्यान दिइनेछ ।

- यो कार्यक्रम समूह, कृषक वा सहकारी मार्फत संचालन गर्ने,
- सेवाग्राहीबाट कार्यक्रम सञ्चालनको प्रस्तावना वा निवेदन माग गर्ने,
- संबन्धित कार्यालयले प्रजाती तथा स्थान छनौट गर्ने,
- कार्य शर्त (ToR) तयार गरी सम्झौता गरी आवश्यक प्राविधिक सहयोग उपलब्ध गराउने,
- यसको लागि स्थानीय स्तरमा जडिवुटी सम्वन्धी समन्वय बैठक, अन्तरक्रिया, गोष्ठी र परिचालन गर्ने,
- यो शिर्षकमा विनियोजित बजेट विरुवा ढुवानी, रोपण, संरक्षण, कोचिङ्ग, आवश्यक संकलन सामाग्रीहरु (टिमुरका लागि) लगायत मुल्य अभिवृद्धिका लागि ग्रेडिंग, ग्रिन्डिंग समेतका कार्यहरुमा खर्च गर्न सकिने,
- वन निर्देशनालय र डिभिजन वन कार्यालयबाट नियमित अनुगमन गर्ने,

### १०. निजी वन विकासका लागि प्रोत्साहन

यस कार्यक्रम अर्न्तगत निजी वन विकासका लागि निजी वन दर्ता गर्न प्रोत्साहन गर्ने, आवश्यक प्राविधिक सहयोग गर्ने, बिरुवा उपलब्ध गराउने, प्रोत्साहन पुरस्कार दिने, प्रचार प्रसार गर्ने लगायतका कृयाकलापहरु संचालन गरिनेछ ।

- सम्बन्धित कार्यालयले निजी वन विकासका लागि मापदण्ड तयार गरी स्थान तथा कृषक छनोट गर्ने,




सचिव

- लागत अनुमान तयार गरी कार्य संचालनका लागि सम्झौता गर्ने,
- आवश्यक प्राविधिक सहयोग गर्ने,
- मन्त्रालय, वन निर्देशनालय र डिभिजन वन कार्यालयबाट अनुगमन गर्ने,
- कार्यक्रम सम्पन्न भए पश्चात सवै कृयाकलापहरु खुल्ने गरी प्रतिवेदन पेश गर्ने ।

**११. प्रचार प्रसार पर्चा पम्पलेट- रेडियो कार्यक्रम, वार्षिक प्रतिवेदन, दिवस समारोह, जिल्लाको पंच वर्षिय योजना निर्माण आदि**

- यो कार्यक्रम मन्त्रालय, वन निर्देशनालय र डिभिजन वन कार्यालयहरुलाई आवश्यक पर्ने वन तथा वातावरण संबन्धी सचेतनाका लागि आवश्यक प्रकाशनका सामग्री पर्चा, पम्पलेट, वार्षिक प्रतिवेदन, दिवस समारोह, लगायतका कृयाकलाप संचालन गर्ने,
- वन, वातावरण तथा भू-संरक्षण अन्तरगत संरक्षण, व्यबस्थापन, वन अतिक्रमण, वन डढेलो नियन्त्रण लगायतका कार्यक्रमहरु रेडियो टेलिभिजनबाट प्रसारण नियमानुसार रेडियो टेलिभिजनसँग संझौता गरी कार्यक्रम संचालन गर्न सकिनेछ ।
- पंच वर्षिय योजनाका लागि प्रचलित नर्मस् अनुसार लागत अनुमान तयार गरी TOR तयार गरी आवश्यकता अनुसार अध्ययन अनुसन्धान गर्न परामर्श सेवा लिइ कार्यक्रम संचालन गरिनेछ ।

**१२. प्रदेश स्तरीय ऐन कानून नीति कार्यविधि आदि निर्माण, योजना तर्जुमा गोष्ठी**

- यस कार्यक्रम अन्तरगत प्रदेश स्तरमा आवश्यक पर्ने वन वातावरण सम्वन्धी कानून निर्माणका कममा चरणवद्ध बैठक, परामर्श, गोष्ठि, तथा छपाइ सम्बन्धी कार्यहरु गर्ने,
- वन वातावरण सम्बन्धी विभिन्न विषयका कार्यविधिहरु, मापदण्डहरु आदि तयार गर्नका लागि आवश्यकता अनुसार बैठक, अर्न्तक्रिया, आदि गर्ने,
- चौमासिक, वार्षिक प्रगती समिक्षा तथा योजना तर्जुमा गोष्ठिहरु समेत संचालन गरिनेछ ।

**१३. प्रादेशिक कुल गार्हस्थ उत्पादनमा वन क्षेत्रको योगदान संबन्धी अध्ययन**

नेपालको कुल ग्राहस्थ उत्पादनमा वन क्षेत्रको योगदान कति रहेको छ भन्ने कुराको अध्ययनमा टेवा पुगोस भनि प्रादेशिक कुल ग्राहस्थ उत्पादनमा वनक्षेत्रको योगदान सम्वन्धी अध्ययन गरिनेछ । यसको लागि कस्तो खालको लेखा प्रणाली आवश्यक छ, कस्ता कस्ता Attribute हरु आवश्यक छन्, आवश्यक तथ्याङ्को श्रोत के हो, भन्ने कुराको यकिन आवश्यक छ ।

- लागत अनुमान र कार्य शर्त तयार गरी प्रचलित कानून बमोजिम प्रकृया पुरा गरी सेवा प्रदायक छनोट गर्ने, संझौता गर्ने, अध्ययन गर्ने, मस्यौदा प्रतिवेदन पेश गर्ने, प्रस्तुतिकरण गर्ने र अन्तिम प्रतिवेदन पेश गरिनेछ ।

**१४. मानव वन्यजन्तु द्वन्द्व व्यबस्थापन सहयोग**

मानव-वन्यजन्तु द्वन्द्वका कारण एकातिर धनजनको क्षति हुने र अर्कोतिर वन्यजन्तु प्रति हुने प्रतिशोधपूर्ण व्यवहारबाट वन्यजन्तुलाई क्षति पुग्ने कृयाकलाप समेत हुँदै आएको अवस्था छ । मानव-वन्यजन्तु बीच हुने द्वन्द्व न्युनिकरण गरी सह-अस्तित्व कायम गर्ने उद्देश्यले यस शिर्षकमा विनियोजन भएको रकम देहायका शिर्षकहरुमा खर्च गरिनेछ ।




सचिव

- वन्यजन्तुको आक्रमणबाट अङ्गभंग भएका व्यक्ति र मृत्यु भएका व्यक्तिका आश्रित परिवारलाई तत्काल बिशेष राहत उपलब्ध गराउने,
- समस्याग्रस्त वन्यजन्तुको उद्धार, टुहुरा, अशक्त तथा घाइते वन्यजन्तुको उपचार तथा व्यवस्थापन सम्बन्धी कार्य,
- टुहुरा, घाइते र समस्याग्रस्त वन्यजन्तुको उद्धार र व्यवस्थापन कार्यमा संलग्न कर्मचारीहरु घाइते भएमा उपचारमा लाग्ने खर्च,
- टुहुरा, घाइते र समस्याग्रस्त वन्यजन्तुको उद्धार र व्यवस्थापन कार्यमा संलग्न कर्मचारीहरुको यातायात, खाना, खाजा लगायतका खर्च,
- टुहुरा, घाइते र समस्याग्रस्त वन्यजन्तुको उद्धार र व्यवस्थापन कार्यमा प्रयोग हुने औषधि तथा सामाग्री र उपकरणमा लाग्ने खर्चहरु ।

**१५. वन अतिक्रमण नियन्त्रण**

वन अतिक्रमण हुन नदिनको लागि यो कार्यक्रम संचालन गरिनेछ ।

- संवन्धित कार्यालयले वन अतिक्रमण हुन नदिन गस्ती परिचालन गर्ने,
- गस्ती परिचालनको लागि आवश्यक फिल्ड सामाग्रीहरु, इन्धन/गाडि भाडा, सवारी साधन मर्मत, खाना, खाजा, मसलन्द खर्च लगायतका शिर्षकहरुमा खर्च गर्न सकिने तर दैनिक भ्रमण भत्तामा खर्च गर्न नसकिने,
- सरोकारवालाहरुसँग गोष्ठी/बैठक संचालन गर्ने, आवश्यकता अनुसार सुरक्षाकर्मी परिचालन गर्ने,
- अतिक्रमण हटाएको क्षेत्रमा वृक्षारोपण गर्ने, तारवार लगाउने, वन हेरालुको व्यबस्था गर्ने ।
- कार्यक्रम सम्पन्न भए पश्चात कार्यक्रम संचालन भएको स्थान, मुख्य उपलब्धीहरु, सान्दर्भिक तस्वीरहरु समावेश गरी प्रतिवेदन पेश गर्नुपर्नेछ ।

**१६. वन अपराध नियन्त्रण**

- वन तथा वन्यजन्तुसँग सम्वन्धित अपराधहरु नियन्त्रण तथा न्यूनीकरण गर्नका लागि प्रचार प्रसार, गस्ती परिचालन, सुराकी परिचालन गर्ने,
- वन अपराध नियन्त्रणको लागि आवश्यक सुरक्षा सामाग्रीहरु, इन्धन/गाडि भाडा, खाना, खाजा, मसलन्द खर्च लगायतका शिर्षकहरुमा खर्च गर्न सकिने तर दैनिक भ्रमण भत्ताका लागि खर्च गर्न नसकिने,
- अपराध अनुसन्धान तथा मुद्दा दायरी, अनुसन्धानको कार्यअघि बढाउने क्रममा आवश्यक सूचना सङ्कलन तथा संचारमा लाग्ने खर्च गर्न सकिने,
- डिभिजन वन कार्यालयहरु मार्फत स्थानीय प्रशासन, प्रहरीको सहयोगमा वन अपराध तथा अतिक्रमण नियन्त्रण गरिनुका साथै सो सम्बन्धी सचेतना कार्यक्रमहरु सञ्चालन गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात गरिएका कृयाकलापहरु समेटी प्रतिवेदन तयार गर्ने ।




सचिव

## १७. वन डढेलो नियन्त्रण तथा रोकथाम

गर्मीको समय अर्थात फाल्गुण चैत्र देखि नै वन जंगल क्षेत्रमा विभिन्न कारणबाट आगलागी एवं डढेलोको प्रकोप गम्भीर रुपमा देखापर्दै आएको छ। कतिपय अवस्थामा मानिसको नियन्त्रण भन्दा बाहिर पनि वन डढेलो प्रकोप देखापर्ने गरेको छ।

- वन डढेलोको नियन्त्रण गर्न जिल्लाको पंचवर्षीय वन व्यवस्थापन कार्ययोजनामा उल्लेखित Action Plan का आधारमा कार्यक्रमहरु कार्यान्वयन गर्ने,
- आवश्यकतानुसार अग्नि हेरालु/समूह बनाई अग्नि नियन्त्रण सञ्जालको रुपमा रुपान्तरण गर्ने,
- नियन्त्रित डढेलो लगाउने (Control Burning), वन क्षेत्रमा भएको प्रज्वलनशील सुख्खा पदार्थ व्यवस्थापन गर्ने, अग्निरेखा निर्माण तथा मर्मत सुधार, प्रचारप्रसार, जनचेतना अभिवृद्धि आदि सम्वन्धित कार्यक्रमहरुमा खर्च गर्न सकिने,
- वन डढेलो नियन्त्रण तथा रोकथामका लागि आवश्यक सुरक्षण सामाग्रीहरु, इन्धन, खाना, खाजा, मसलन्द खर्च लगायतका शिर्षकहरुमा खर्च गर्न सकिने,
- स्थानीय संचार माध्यमहरुबाट वन डढेलो नियन्त्रणसम्बन्धी सूचना तथा सन्देशहरु प्रसारण गर्ने,
- सरोकारवालाहरुको लागि वन डढेलो व्यवस्थापन तालिम/गोष्ठि/बैठक सञ्चालन गर्ने,
- सार्वजनिक खरिद ऐन तथा नियमावलीको आधारमा वन डढेलो नियन्त्रणका लागि अग्निरोधक सामग्री खरिद तथा वितरण गरी डढेलो नियन्त्रणको कार्यमा प्रयोग गर्ने,
- डिभिजन वन कार्यालयहरुले वन डढेलो नियन्त्रण तथा व्यवस्थापन योजना तयार तथा स्वीकृत गरी सोही बमोजिम कार्यहरु गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात प्रगति पेश गर्दा निम्न बुंदाका विषयहरु समावेश गर्नुपर्नेछ।
  - कार्यक्रम सञ्चालन भएको स्थान र आगलागी भएको क्षेत्रको अवस्थिति नक्सा,
  - मुख्य उपलब्धिहरु,
  - क्षतिको विवरण,
  - कार्यक्रम सञ्चालनमा आईपरेका समस्याहरु।
  - समस्या समाधानका लागि गरिएका पहलहरु।
  - सान्दर्भिक तस्वीरहरु।

## १८. वन, वनस्पति जलाधार कार्यालयहरुको निरिक्षण तथा प्रतिवेदन

मन्त्रालय तथा निर्देशनालयबाट मातहतका निकायहरुले सम्पादन गरेका कार्यक्रमहरुको अनुगमन तालिका अनुसार निरिक्षण गरी सो को प्रतिवेदन मन्त्रालय र निर्देशनालयमा पेश गरिनेछ।

## १९. वन विउ वगैंचा संरक्षण तथा सुधार कार्यक्रम निरन्तरता

वर्षेनी लाखौ रुखजन्य बिरुवा उत्पादन गरी वन क्षेत्र विस्तारका लागि वृक्षारोपण गरिदै आइएको छ।तर सधैंजसो गुणस्तरीय बीउको समस्या रहेको पाइएको छ। गुणस्तरीय बिउको सुनिश्चताका लागि प्राकृतिक क्षेत्रमा नै स्वस्थ माउ रुखहरुको संरक्षण गर्न यो कार्यक्रम सञ्चालन गरिने छ। यो डिभिजन वन कार्यालय मार्फत यो कार्यक्रम सञ्चालन गरिनेछ।

- जिल्लाका लागि महत्वपूर्ण रुखजन्य विरुवा र स्थानको छनौट सम्बन्धित डिभिजन वन कार्यालयले गर्ने,




सचिव

- रुख प्रजातीको प्राकृतिक बासस्थान राष्ट्रिय वन वा समूहद्वारा व्यवस्थित वन हुन सक्ने,
- राष्ट्रिय वन क्षेत्रमा वन बिउ बगैचा स्थापना गर्नु परेमा वन प्राविधिक मार्फत तथा समूहद्वारा व्यवस्थित वनमा वन बिउ बगैचा स्थापना गर्नु परेमा सम्बन्धित उपभोक्ता समूह मार्फत गर्ने,
- वन बिउ बगैचा स्थापना तथा संरक्षण गर्दा सम्बन्धित वन क्षेत्रलाई तारबार तथा झाडी सफाई का साथसाथै वन हेरालुको समेत व्यवस्था गर्न सकिने ।

**२०. वन सम्वर्द्धन क्रियाकलाप संचालन- पहाडी जिल्ला**

प्रदेश भित्र रहेका पहाडी जिल्लाहरुमा वन संवर्द्धन गर्नका लागि यो कार्यक्रम संचालन गरिनेछ ।

- सम्बन्धित डिभिजनल वन अधिकृतले यस कार्यको लागि आवश्यक मापदण्ड तयार गरी समूह तथा वन क्षेत्र छनौट गर्ने,
- डिभिजन वन कार्यालयहरुबाट उपभोक्ता समूहको संलग्नतामा वन संवर्द्धन तथा व्यवस्थापनका लागि आवश्यक क्रियाकलाप, कोचिंग लगायत संचालन गर्ने,
- सव डिभिजन वन कार्यालयले प्राविधिक सहयोग तथा डिभिजन वन कार्यालयबाट संचालित कार्यक्रमको अनुगमन गर्ने,
- कार्य सम्पन्न प्रतिवेदन तयार गर्ने ।

**२१. बनस्पति संरक्षण तथा उद्यान विकास तालिम**

- बनस्पति उद्यानको अवधारणा तथा संरचना संबन्धी विषय वस्तुमा संबन्धित कर्मचारी तथा सरोकारवाहरुलाई सहभागी गराई वन अनुसन्धान तथा प्रशिक्षण केन्द्र मार्फत तालिम दिइनेछ ।

**२२. संकटापन्न तथा लोपोन्मुख वन्यजन्तु संरक्षण कार्यक्रम**

यस शीर्षकमा विनियोजन भएको रकम डिभिजन वन कार्यालयहरु मार्फत संरक्षणका क्रियाकलापहरु सञ्चालन गरिनेछ ।

- यस कार्यक्रम अन्तर्गत संकटापन्न तथा लोपोन्मुख वन्यजन्तु पहिचान गर्ने,
- Hotspots पहिचान गरी स्व स्थानीय संरक्षण योजना तयार गर्ने,
- वन्यजन्तु संरक्षण तथा बासस्थान सुधारका कार्यहरू संरक्षण योजना अनुरुप गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात प्रतिवेदन तयार गर्ने ।

**२३. साझेदारी वन व्यबस्थापन**

यो कार्यक्रम साझेदारी वन कार्यक्रम संचालन भएका नवलपरासी, रुपन्देही र कपिलवस्तु जिल्लामा रहेका ८ वटा साझेदारी वनहरुमा संचालन गरिनेछ । यी साझेदारी वनमा स्वीकृत वैज्ञानिक वन व्यबस्थापन कार्यविधि, साझेदारी वन सम्बन्धी कार्यविधि/निर्देशिका, स्वीकृत कार्ययोजना तथा प्रचलित नर्मस् वमोजिम कार्यक्रम संचालन गरी वनको उत्पादकत्व तथा उत्पादन र राजश्वमा वृद्धि गर्ने योजना सहित डिभिजन वन कार्यालय मार्फत संचालन गरिनेछ । यस कार्यक्रमको लागि आवश्यक पर्ने मानविय श्रोत, प्राविधिक सहयोग डिभिजन वन कार्यालयमा कार्यरत मानव श्रोत वा परामर्श सेवा मार्फत उपलब्ध गराईनेछ ।




सचिव

- डिभिजन वन कार्यालयबाट स्वीकृत कार्ययोजना अनुसार वैज्ञानिक वन व्यवस्थापन गर्ने क्षेत्रफललाई आधार मानी कार्ययोजना कार्यान्वयन गर्न एक जना अधिकृत तोक्ने,
- तोकिएको अधिकृतको सहयोगमा कार्यक्रम कार्यान्वयनका लागि साझेदारी वन व्यवस्थापन समूहले वार्षिक कार्यक्रम योजना तयार गरी डिभिजन वन कार्यालयबाट स्वीकृत गराई सोही बमोजिम कार्यक्रम संचालन गर्ने,
- वन संरक्षण, अग्निरेखा निर्माण तथा मर्मत र वन व्यबस्थापनका कृयाकलापमा खर्च गर्ने,
- कार्यालयको प्रशासनिक खर्च र काठ, दाउरा संकलन शिर्षकमा यो रकम खर्च नगर्ने,
- रुख छपान, लगत संकलन, कटान, घाटगद्दि गर्ने प्रकृया प्रचलित नियम अनुसार गर्नुपर्ने,
- Post Harvesting क्रियाकलापहरु सञ्चालन गर्ने,
- नियम अनुसार काठ दाउरा विक्री वितरण गर्ने ।
- मन्त्रालय, वन निर्देशनालय र डिभिजन वन कार्यालयबाट अनुगमन गर्ने,

**२४. सामुदायिक वनको विधान कार्ययोजना निर्माण**

प्रचलित ऐन, नियमावली तथा सामुदायिक वन विकास कार्यक्रमको मागदर्शन अनुसार आवश्यक प्रक्रियाहरु पूरा गरेर सम्पन्न गर्नुपर्नेछ ।

- सामुदायिक वन उपभोक्ता समूह गठन तथा दर्ता प्रक्रियामा सहजीकरण उपलब्ध बजेटबाट टोल/समुदाय छलफल गोष्ठी, खाजा खर्च, भ्रमण खर्च, ईन्धन, सञ्चार र बिधान तयारीको लागि मसलन्द, टाइपिङ्ग, प्रिन्टिङ्ग र बाईन्डिङ्गमा खर्च गर्ने,
- कार्यक्रम सम्पन्न भएपछि प्रगतिमा निम्न बुंदाहरु समाबेश गर्नुपर्नेछ :
  - ✓ गठित समूहको नाम र ठेगाना
  - ✓ सामुदायिक वनबाट लाभान्वित हुने घरधुरी संख्या र जनसंख्या,
  - ✓ कार्य समितिको स्वरुप (संख्या तथा समावेशी प्रतिनिधित्व),
  - ✓ बैठक तथा आमभेलाको खाजा खर्च माग गर्दा माईन्यूटको छायाँकपि समेत संलग्न गर्नुपर्ने ।

सामुदायिक वन कार्ययोजना तयारी तथा वन हस्तान्तरण प्रक्रियामा सहजीकरण कार्ययोजना तयारी कार्यको सहजीकरण तथा सिफारिस गर्ने काम कम्तीमा रेञ्जरपदका वन प्राबिधिकबाट हुनुपर्नेछ । यसका लागि प्रचलित सामुदायिक वन स्रोत सर्भेक्षण मार्गदर्शन अनुसार वन स्रोत सर्भेक्षण गर्ने तथा GPS बाट सीमा सर्भेक्षण तथा Permanent sample plot layout गरी सामुदायिक वनको बिस्तृत नक्सा समेत पेश गर्नुपर्नेछ ।

**२५. सामुदायिक वन कार्ययोजना नविकरण**

कार्ययोजनाको अवधि समाप्त भएका र कार्ययोजना पुनरावलोकन तथा संशोधनका लागि समूहबाट माग भई आएका सामुदायिक वनको कार्ययोजना पुनरावलोकन गर्न सामुदायिक वनको विधान कार्ययोजना निर्माण शिर्षकमा उल्लेख भए अनुसार प्रकृया पुरा गरी कार्यक्रम संचालन गरिनेछ ।




सचिव

## २६. सामुदायिक वनमा वैज्ञानिक वन व्यबस्थापन (कार्ययोजना तयारी तथा कार्यान्वयन)

वैज्ञानिक वन व्यबस्थापन गर्न सकिने संभावित सामुदायिक वनहरुमा वैज्ञानिक वन व्यबस्थापन कार्ययोजना तयार गरी कार्यान्वयन गर्ने उद्देश्यले यो कार्यक्रम संचालन गरिनेछ । डिभिजन वन कार्यालयहरुले यस कार्यको लागि सामान्यतया १०० हेक्टर वा सो भन्दा वढी क्षेत्रफल भएका सामुदायिक वनहरुको छनोट गर्नुपर्नेछ । आवश्यक पर्ने प्राविधिक सहयोग डिभिजन वन कार्यालयबाट उपलब्ध हुनेछ । डिभिजन वन कार्यालयको मानविय श्रोतले नभ्याउने अवस्था तथा उपयुक्त प्राविधिक क्षमता नभएको अवस्थामा बाह्य श्रोतबाट परामर्श सेवा लिइ कार्य योजना तयार गर्न सकिनेछ ।

- वैज्ञानिक वन व्यबस्थापन कार्ययोजना तयार गर्ने समूहले आवश्यक प्रकृया पूरा गरी समूहको साधारण सभाबाट निर्णय गरी कार्ययोजना पारित गर्नुपर्ने,
- समूहबाट पेश हुन आएको कार्ययोजना डिभिजन वन कार्यालयबाट स्वीकृत भए पश्चात सोही कार्ययोजना बमोजिम वन व्यबस्थापनका कृयाकलाप कार्यान्वयन गर्नुपर्ने,
- यस शिर्षकमा विनियोजन भएको रकम विगत वर्षमा स्वीकृत भएको कार्ययोजना कार्यान्वयनका लागि समेत खर्च गर्न सकिने,
- सामुदायिक वनको वैज्ञानिक वन व्यबस्थापनको प्रत्यक्ष अनुगमन कार्यको लागि अधिकृत स्तरको कर्मचारीलाई डिभिजन वन कार्यालयले तोक्ने र डिभिजनल वन अधिकृतबाट नियमित रुपमा स्थलगत अनुगमन गरिनेछ ।
- वैज्ञानिक वन व्यबस्थापन लगायत यससँग संबन्धित शिर्षकको सवै क्रियाकलापहरु स्वीकृत नर्मस अनुसार संचालन गर्नुपर्नेछ । नर्मसमा उल्लेख नभएको कृयाकलाप जिल्ला दररेट अनुसार खर्च गर्न सकिनेछ । संझौता अनुसार कार्य सम्पन्न भए पछि अनुगमन मुल्यांकन भए पश्चात कार्यक्रमको खर्च रकम भुक्तानी गरिनेछ ।

## २७. वन प्रवर्धन तथा व्यबस्थापन

यस कार्यक्रम अन्तर्गत समुदायद्वारा व्यबस्थित वनहरुमा वन विकास तथा व्यबस्थापनका कृयाकलापहरु गरिनेछ ।

- वृक्षारोपण, गोडमेल, थिनिङ्ग, प्रुनिङ्ग, झाडी सफाइ, तारबार, मुना व्यबस्थापन लगायतका कृयाकलाप, वन संरक्षणका कृयाकलाप र वैज्ञानिक वन व्यबस्थापनका कृयाकलापहरु आवश्यकताका आधारमा गर्ने,
- डिभिजन वन कार्यालयबाट समूहको मागको आधारमा स्थलगत अवलोकन तथा अन्तरक्रिया गरी समूह तथा वन क्षेत्र छनोट गर्ने,
- वन प्राविधिकबाट कार्यक्रमको प्रस्ताव, लागत अनुमान तयार गरी स्वीकृत गर्ने,
- उपयुक्त समयमा आवश्यक वन प्रवर्धन तथा व्यबस्थापनका कृयाकलापहरु गर्ने,
- कार्यसम्पन्न भए पश्चात गरिएका कृयाकलाप, सहभागीहरु, फोटो, उपलब्धी खुल्ने गरी प्रतिवेदन पेश गर्ने ।

## २८. वन्यजन्तु क्षति राहत सहयोग कार्यक्रम

- वन क्षेत्रबाट वन्यजन्तु बाहिर आई स्थानीय जनताको जिउधनमा क्षति पुर्याएको खण्डमा नियम अनुसार प्रकृया पुरा भई राहत सहयोगको लागि माग हुन आएमा प्रचलित वन्यजन्तुबाट हुने




सचिव

क्षतिको राहत सहयोग निर्देशिकामा उल्लेख भएको व्यवस्था बमोजिम वन निर्देशनालय मार्फत राहत सहयोग उपलब्ध गराउने,

- प्रादेशिक वन्यजन्तुबाट हुने क्षतिको राहत सहयोग निर्देशिका तयार गर्ने ।

**२९. गत वर्ष रोपण भएका विरुवाको पुनः स्याहार संभार**

- डिभिजन वन कार्यालयले कर्मचारी मार्फत वा सामुदायिक वन उपभोक्तासमूह मार्फत गर्ने,
- विगतका बर्षमा वृक्षारोपण गरिएका प्लट/क्षेत्रहरुमा रहेका विरुवाहरुको गोडमेल, पुनःरोपण, वन हेरालु, तारबार निर्माण, मर्मत आदि जस्ता कार्यहरुमा खर्च गर्न सकिने,
- कार्यक्रम सम्पन्न पश्चात निम्न कागजातहरुको आधारमा भुक्तानी दिइनेछ ।
    - ✓ कार्य सञ्चालन गरिएको स्थानको क्षेत्रफल जि.पि.एस. नक्शा समेत
    - ✓ सञ्चालन गरिएका मुख्य मुख्य कार्यहरुको विवरण
    - ✓ गोडमेल र पुनःरोपण गरिएका विरुवाहरुको सख्या र प्रजातीको विवरण
    - ✓ कार्य सम्पन्न प्रतिवेदन
    - ✓ सान्दर्भिक तस्वीरहरु

**३०. ग्रामिण सडकसँग भू संरक्षण कार्यक्रम**

ग्रामिण क्षेत्रहरूमा सडकको पुर्वाधार निर्माणका कार्यहरूले ठुलो परिमाणमा भू स्खलन गराएको कारणले जैविक विविधता, भू उपयोग प्रणाली तथा विविध क्षेत्रहरूमा नकरात्मक असर बढ्दै गइरहेको सन्दर्भमा उक्त कार्यबाट हुन सक्ने जोखिम न्यूनीकरण गर्नु यस कार्यक्रमको मुख्य उद्देश्य हुनेछ ।

- ग्रामिण सडकको दायाँ बायाँ हरित प्रविधिको विकास, गल्छी पहिरो रोकथाम, भलपानीको व्यवस्थापन गर्दै एकीकृत जलाधार व्यबस्थापन गर्ने,
- भू तथा जलाधार व्यवस्थापन कार्यालय मार्फत कार्यक्रमको डिजाइन, सर्भे, लागत इष्टिमेट, संझौता, कार्यान्वयन तथा अनुगमन गर्ने,
- गाउँघरमा निर्माण गरिने सडक किनाराहरूको संरक्षण गर्न बायोइन्जिनियरिंग प्रविधी (टेवा पर्खाल, पेलिसेड, चेकड्याम, रिपर्याप, घाँस तथा बाँस रोपण, अम्रिसो रोपण लगायतका कृयाकलाप) संचालन गरिनेछ ।

**३१. गल्छी, पहिरो तथा खहरे रोकथाम**

यो कार्यक्रम भू तथा जलाधार व्यवस्थापन कार्यालय मार्फत प्राथमिकता प्राप्त उपजलाधार र नदी प्रणालीमासञ्चालन गरिनेछ ।

- गल्छी, पहिरो तथा खहरे लगायतका क्षेत्रमा भु संरक्षणका कृयाकलाप सञ्चालनगर्दा माथिल्लो तटिय क्षेत्र खास गरी चुरे पहाडको भिरालो क्षेत्रमा हुने सतही रिल र गल्छि जस्ता भु क्षयको उपचार वायो इन्जिनियरिंग प्याकेजबाट गर्नुपर्नेछ ।
- यस कार्यक्रममा तपसिलका उपचार विधी प्रयोग गर्न सकिनेछः
    - ✓ वनस्पति तथा स साना संरचना, पानी निकास
    - ✓ कम खर्चिलो भू प्रविधि
    - ✓ dry stone,loose stone, brush stone checkdam
    - ✓ fascine, pallisade, wattling, layering, rip rap, hedge row






सचिव

✓ contour trenching, contour bunding, jute netting
✓ स साना इन्जिनियरिंग संरचना
✓ घाँस रोपण, वाँस रोपण, वृक्षारोपण, हाँगा रोपण आदी

- यस कार्यक्रम स्थानीय तहसँग समन्वय गरी उपभोक्ता समिति मार्फत सञ्चालन गर्ने,
- संबन्धित निकाय/कार्यालयबाट अनुगमन गरिनेछ।

**३२. ढकेरी वनस्पति उद्यानको व्यवस्थापन कार्ययोजना कार्यान्वयन**

डिभिजन वन कार्यालय, बाँके मार्फत वनस्पति अनुसन्धान केन्द्र, बाँकेसँग समन्वय गरी ढकेरी वनस्पति उद्यानको स्वीकृत व्यबस्थापन कार्ययोजनामा उल्लेखित कृयाकलापहरु संचालन गरिनेछ।

**३३. नदी किनार संरक्षणका लागि बाँस रोपण**

- नदी कटान भईरहेको र कटानको सम्भावना रहेको नदी किनारको जग्गामा बाँसका विभिन्न प्रजातीका बिरुवा, कलमी, राईजोमहरु रोपण गर्ने,
- उक्त जग्गामा चरिचरण र अतिक्रमण रोक्नको लागि तारबारका साथै रेखदेखको लागि वन हेरालु राखी संरक्षण गर्ने,
- यस्तो जग्गामा सकभर deep rooted र झाँगिने झाडी प्रजातीका बाँसका विरुवाहरुलाई प्राथमिकता दिने,
- नदी किनारका खाली जग्गाहरुमा बाँसको वृक्षारोपण, संरक्षण, विकास एवं व्यवस्थापनको लागि स्थानीय निकायरसंघसंस्था साथै नजिक रहेका बिभिन्न स्थानिय समूह/समितिहरु मार्फत पनि कार्य गर्न सकिने,
- नदी किनारको जोखिम हेरी ईन्जिनियरिङ संरचनाहरु dyke, spur, green belt, लगायत वायोईन्जिनियरिङ प्रविधि अपनाई संरक्षण तथा व्यबस्थापन गर्न सकिने छ।

**३४.नदि तथा खोला किनार व्यवस्थापन**

- नदि तथा खोलाको वहावलाई नियमन गरी किनारमा हुने अनियन्त्रित कटान र overflow वाट वस्ती, खेतीयोग्य जमिन, नदी उकास जग्गा र महत्वपुर्ण संरचना संरक्षण गर्न यो कार्यक्रम भू तथा जलाधार व्यवस्थापन कार्यालय मार्फत सञ्चालनगर्ने,
- नदि तथा खोला किनारा स्थिरीकरण तथा व्यबस्थापन कार्यक्रम सञ्चालनगर्दा छनोट गरिएका नदी प्रणालीमा नदी प्रणाली एकीकृत श्रोत व्यबस्थापनका कार्यक्रमहरू सञ्चालनगर्ने,
- नदी किनारा व्यबस्थापनका लागि नदि किनारामा संरचनाको निर्माण गर्दा नदी वहावको लागि प्राविधिक रूपले आवश्यक पर्ने नदीको वहाव क्षेत्र नघटाइ गर्ने,
- निर्मित संरचनाको दिगो संरक्षण गर्नको लागि नदीको दुवै किनारामा स्पर, डाइक तटवन्धन, वायोइन्जिनियरिंग, हरित पेटीका लगायतका संरक्षणका कृयाकलाप गरिनेछ।

**३५. नदी उकास तथा सार्वजनिक जग्गामा विरुवा रोपण**

- सम्बन्धितकार्यालयले आफ्नो कार्यक्षेत्र भित्र रहेका नदी उकास तथा सार्वजनिक क्षेत्र पहिचान गर्ने,
- समूह तथा स्थानिय तहसँग छलफल तथा अन्तरक्रिया गरी कार्यविवरण तयार गर्ने,






सचिव

- सम्बन्धित उपभोक्ता समिति सँग समन्वय गरी कार्यक्रम सञ्चालन गर्ने,
- कार्यक्रम कार्यान्वयनमा प्राविधिक सेवा उपलब्ध गराउने,
- सम्बन्धित निकायबाट अनुगमन गर्ने ।

**३६.नमूना भू-संरक्षण अध्ययन प्लट स्थापना तथा व्यवस्थापन**

यो कार्यक्रम भू तथा जलाधार व्यवस्थापन कार्यालय मार्फत सञ्चालन गरिनेछ ।

- नमूना प्रदर्शनी स्थलमा कार्यक्रम सञ्चालन गर्दा गरिने कृयाकलापहरु पहिरो रोकथाम, पानी मुहान संरक्षण, संरक्षण पोखरी निर्माण, गोरेटो बाटो सुधार, गल्छी खहरे रोकथाम, ग्रीन बेल्ट, हरित पेटिका, खेतबारी संरक्षण, विरुवा उत्पादन, वृक्षारोपण, घाँस/डाले घाँस रोपण, फलफूल रोपण, जडिबुटि रोपण जस्ता कार्यक्रमहरु एउटा निश्चित सुक्ष्म जलाधार क्षेत्र भित्र सबैले देखिने प्रदर्शनी स्थलको रुपमा विकास गरिने छ ।
- यो कार्यक्रमबाट प्रदर्शनी स्थलमा अवलोकन गर्ने सबै व्यक्तिहरुमा भूक्षय न्यूनीकरण गर्ने प्रविधि सम्वन्धी सिकाई हुनुपर्ने,
- प्राविधिकहरूको सहयोगमा लागत अनुमान स्वीकृत गराइ उपभोक्ता समिति मार्फत यो कार्यक्रम सञ्चालन गर्ने,
- संबन्धित निकाय तथा कार्यालयबाट अनुगमन गरि पृष्ठपोषण प्रदान गर्ने ।

**३७. पकेट क्षेत्रमा जडिबुटीका बिरुवा उत्पादन**

प्राकृतिक रुपमा रहेका उच्च मुल्य पर्ने जडिवुटीहरुलाई व्यवसायिक रुप दिनका लागि आधुनिक नर्सरीहरुको स्थापना गरि विरुवा उत्पादन कार्यलाई प्राथमिकता दिइनेछ ।

- जिल्लामा प्रचुर मात्रामा पाइने तथा खेती गर्न सम्भावना भएका जडीवुटी प्रजाती छनौट गरी प्रचलित कानूनको अधिनमा रहि विरुवा उत्पादन गर्ने,
- जडीबुटी तथा गैह्रकाष्ठ प्रजातीका बिरुवा उत्पादन गरी बृक्षारोपण गर्न अभिप्रेरित गर्ने,
- खेती सम्भावित जडीवुटी खेतीको प्रवर्द्धन गर्न तथा विगतका वर्षमा पहिचान भएका जडीवुटी पकेट क्षेत्र रहेको वनक्षेत्र, निजी जग्गामा जडीवुटीहरुको खेती विस्तार गरी बैकल्पिक आयस्रोतको रुपमा विकास गर्ने,
- जडीबुटी तथा गैह्रकाष्ठ वन पैदावारको आपूर्ति र उत्पादनमा अभिबृद्धि भई आयआर्जन तथा जीविकोपार्जनमा सुधार पुर्‍याउने,
- वन निर्देशनालय र डिभिजन वन कार्यालयहरु मार्फत पकेट क्षेत्र छनौट गरी कार्यालय आफैले वा सामुदायिक वन, निजी नर्सरी, साझेदारी वनसँग सहकार्य गरी विरुवा उत्पादन गर्न सकिने,
- तोकिएको परिमाण विरुवा उत्पादन गरी लक्षित वर्गमा वितरण गरेको अभिलेख सम्बन्धित निकायमा पेश गर्ने,
- जडीबुटी तथा गैह्रकाष्ठ प्रजातीका विरुवा उत्पादन गर्दा उच्च मूल्य भएका, बजारमा माग भएको स्थानीय किसानको रुचि, स्थान विशेष हावापानीमा हुर्कन सक्ने जडिबुटी तथा सुगन्धित वनस्पति विरुवा उत्पादनको लागि प्रजातीहरुको सर्भेक्षण गरी सो को सूची बनाई उत्पादन गर्नुपर्ने,
- विरुवा उत्पादन गर्दा अनिवार्य रुपले छनौट गरिएको प्रजातीको माउबोट, बीउ वा वीजन स्रोत को गुणस्तरीयता र सही पहिचान भएको सुनिश्चित गर्नुपर्ने,




सचिव

- वनस्पति विभागबाट प्रकाशित Good Agricultural and Cultivation Practice Guideline को अनुसुचि १ अनुसारको आधारमा छनौट गरी अभिलेख राख्नुपर्ने तथा सम्भव भएसम्म छनौट गरिएका माउबोटको गुणस्तर परीक्षण गराएर मात्र विउ विजन प्रयोग गर्नुपर्नेछ ।

**३८. विरुवा उत्पादन वा खरिद (वहुवर्षिय समेत)**

यो कार्यक्रम डिभिजन वन कार्यलयमार्फत गरिनेछ । वनक्षेत्रलाई जैविक विविधतायुक्त बनाउन, वैकल्पिक आयस्रोतको रुपमा विकास गर्न बिरुवा उत्पादन वा खरिद गरी बृक्षारोपण गर्न अभिप्रेरित गर्ने र यस्ता विरुवाको आपूर्ति र उत्पादनमा अभिबृद्धि भई आयआर्जन तथा जीविकोपार्जनमा सुधार पुऱ्याउने उद्धेश्यबाट यो क्रियाकलाप सञ्चालनगरिनेछ ।

- विरुवा उत्पादन वा खरिद गर्दा उच्च मूल्य, बजारमा माग भएको र स्थानीय किसानको रुचि अनुसारको प्रजातीहरुको सर्भेक्षण गरी सो को सूची बनाई उत्पादन वा खरिद गर्नुपर्ने,
- नर्सरीमा बिरुवा उत्पादन गर्दा स्थानीय आवश्यकता तथा व्यवसायिक महत्वका विरुवा प्रजाती, सुगन्धित घाँस तथा बाँस कलमी विरुवा उत्पादन गर्नुपर्ने,
- विरूवा उत्पादन सम्भव नभएमा स्थानीय निजी नर्सरीवाट गुणस्तरिय बिरुवा खरिद गरि वितरणको व्यवस्था मिलाउनुपर्ने,
- बहुवर्षिय बिरुवा खरिदको हकमा प्रचलित बजार भाउ/जिल्ला दररेट अनुसार खरिद गर्न सकिने,
- विरुवा वितरण गर्दा सबै प्रकारका वनहरुमा जनसहभागिता परिचालन गरी बृक्षारोपण गर्न अभिप्रेरित गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात उत्पादन वा खरिद गरिएको विरुवाको अभिलेख, नर्सरीमा उत्पादित बिरुवा संख्या, वृक्षारोपण गरिएको क्षेत्रको क्षेत्रफल (जि.पि.एस. कोअर्डिनेट), रोपिएका बिरुवा संख्या, सो को फोटो, सूचक सहितका अन्य उपलब्धि र प्रभावकारिता सहितको प्रगति प्रतिवेदन प्रस्तुत गर्नुपर्नेछ ।

**३९. संकटापन्न तथा लोपोन्मुख वनस्पतिको बासस्थान संरक्षण कार्यक्रम**

नेपालमा करिब ७००० को हाराहारीमा फूल फूल्ने वानस्पतिक जैविक विविधता रहेको पाइएको छ । विविध कारणहरुले गर्दा दिनानुदिन यिनीहरुको संख्या घट्दै गइरहेको वर्तमान अवस्थामा संकटापन्न तथा लोपोन्मुख वनस्पतिहरुको संरक्षणका लागि उचित कार्यक्रमहरु सञ्चालन गर्नु पर्दछ । बासस्थान विशेष संरक्षण कार्यक्रमहरु सञ्चालन मार्फत यस प्रदेशबाट लोप हुन लागेका वनस्पतिहरुको संरक्षण गर्ने लक्ष्य यस कार्यक्रमको रहेको छ ।

- सम्वन्धित वन कार्यालयबाट आफ्नो कार्य क्षेत्र भित्र पाईने बोटबिरुवाहरु मध्ये लोपोन्मुख तथा संकटापन्न प्रजातीहरुको पहिचान गरि सूची तयारी गर्ने,
- सूची तयार गर्दा प्रजातीको प्राकृतिक बास स्थानमा उपलब्धता, त्यस प्रजातीको दोहनको अवस्था र उपयोगी गुणको आधारमा प्राथमिकिकरण गर्ने,
- प्राथमिकता प्राप्त वनस्पति प्रजातीको Hotspots पहिचान गरी प्राकृतिक वासस्थानमा नै स्व स्थानीय संरक्षण योजना (In-Situ Conservation Plan) तयार गरी सम्वन्धीत डिभिजन वन कार्यालयवाट नै स्वीकृत गरी सव डिभिजन कार्यालय मार्फत सञ्चालन गर्ने,




सचिव

- योजनामा In-situ conservation गरिने प्रजातीको स्रोत सर्वेक्षण, अवस्थाको मूल्यांकन, पाईने क्षेत्रको नक्शाकंन, संरक्षणका चूनौतीहरु, संरक्षण व्यवस्था, बासस्थान सुधार, वन पैदावारहरुको संकलनतथा नियमन कार्यक्रम आदि समावेश हुनु पर्ने,
- सामुदायिक वनक्षेत्र भित्र पर्ने भएमा सम्बन्धित समूहहरुसँग प्रचलित कानूनहरुको अधिनमा रहि सम्फौता गरी कार्य सञ्चालन गर्ने,
- बास स्थान संरक्षण कार्यका लागि सचेतना गोष्ठी, तारबार, वनहेरालु, फ्राडी सफाइ, आदि जस्ता कृयाकलापहरु सञ्चालनगर्ने,
- दुर्लभ वनस्पतिको फैलावटका लागि विरुवा उत्पादन गरि सो क्षेत्र लगायत अन्य स्थानमा समेत रोपण गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात कार्यस्थलको अनुगमन गरि अवस्थिति, फोटो, सूचक सहितका अन्य उपलब्धि र प्रभावकारिता सहितको प्रगति प्रतिवेदन तयार गरि मन्त्रालय र वन निर्देशनालयमा सम्बन्धित डिभिजन वन कार्यालय मार्फत पेश गरिने छ ।

**४०.सडक किनार तथा अतिक्रमण हटाईएको क्षेत्रमा विरुवा रोपण**

यो कार्यक्रम अन्तर्गत सडक किनार तथा वन अतिक्रमण हटाईएको क्षेत्रमा वृक्षारोपण गरी वातावरण संरक्षण तथा वन क्षेत्रको विस्तार गरिने छ । यस कार्यको लागि डिभिजन वन कार्यालय र स्थानीय सरोकारवालाहरुको संलग्नतामा बहुउपयोगी स्वदेशी रुखजन्य बिरुवा रोपण गरिने छ । सडक किनारमा सदावहार, सौन्दर्यात्मक र मफौला खालका रुख हुने विरुवाहरु रोपण गरिनेछ ।

- विरुवा खरिद, ढुवानी, वृक्षारोपण र यसको स्याहार संभार आदिमा खर्च गर्ने,
- कार्यक्रम सम्पन्न पश्चात अतिक्रमण हटाई वृक्षारोपण गरिएको क्षेत्रको क्षेत्रफल (जि.पि.एस् कोअर्डिनेट), हटाइएको घरधुरी संख्या, रोपिएका बिरुवा संख्या, सो को फोटो, सूचक सहितका अन्य उपलब्धि र प्रभावकारिता सहितको प्रगति प्रतिवेदन प्रस्तुत गर्नुपर्नेछ ।

**४१.सामुदायिक वनमा पर्यापर्यटन विकास सहयोग कार्यक्रम**

सामुदायिक वनहरु काठ, दाउरा उत्पादनको माध्यम मात्र नभइ पर्यापर्यटनको सम्भावना बोकेका क्षेत्र रहँदै आएका छन् । केहि सामुदायिक वनहरुले स्वत स्फुर्त रुपमा पर्या पर्यटनको व्यबस्थापन गरी समूहको थप आम्दानीका श्रोत बनाउनुका साथै रोजगारीका अवसर पनि प्रदान गरेका छन् । वनको हैसियत र अवस्थामा कमी नल्याइकन पर्यापर्यटनको सम्भावना बोकेका सामुदायिक वनहरुले पर्यापर्यटनको विकासका साथै रोजगारी सृजना गर्ने उदेश्यले यो कार्यक्रम सञ्चालन गरिनेछ ।

- जैविक विविधता, सांस्कृतिक महत्व र पर्यटकिय सम्भावना बोकेका सामुदायिक वन उपभोक्तासमूहहरुबाट कार्यक्रम लागत अनुमान, कार्यक्रम डिजाइन उल्लेख गरी कार्यक्रमको सञ्चालनको लागि प्रस्ताव माग गर्ने,
- डिभिजन वन कार्यालयमा प्राप्त हुन आएका प्रस्तावहरुमाथी छलफल गर्ने, सम्बन्धित स्थानमा अवलोकन भ्रमण तथा स्थानिय समूहसँग अन्तरक्रिया गर्ने र सामुदायिक वनको स्थलगत अध्ययन गरी समूह छनौट गर्ने,
- छनौट गरिएका समूहको प्रस्ताव, डिजाइन र लागत अनुमानमा आवश्यक छलफल तथा संशोधन गरी कार्यक्रम सञ्चालन गर्नका लागि संफौता गर्ने,



उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
प्रदेश सरकार
प्रदेश नं ५
बुटवल, नेपाल

सचिव

- संझौता पश्चात स्वीकृत डिजाइन अनुसार पर्यापर्यटनका कृयाकलापहरु सञ्चालन गर्ने,
- यस कार्यक्रम अन्तर्गत सामुदायिक वन क्षेत्रमा आन्तरिक तथा वाह्य पर्यटक आकर्षित हुने खालका कृयाकलाप जस्तै सेडघर, वन पथ, पोखरी निर्माण/मर्मत, विश्राम स्थल (पुर्वाधार होइन), पुष्प वाटिका, वनस्पति उद्यान, पदमार्ग, लगायतका निर्माण गर्न सकिने (वातावरणमैत्री हुनुपर्ने),
- संबन्धित निकायबाट कार्यक्रमहको अनुगमन गर्ने,
- कार्यक्रम सम्पन्न भए पश्चात स्थलगत प्रतिवेदन, कृयाकलापको फोटो, उपलब्धी उल्लेख गरी समूहले डिभिजन वन कार्यालयमा प्रतिवेदन पेश गर्नुपर्ने,
- यस कार्यक्रमको लागि उपभोक्ता समूहको कोषबाट समेत खर्च गर्न सकिने,

**४२. जडिवुटी प्रशोधन केन्द्र स्थापना (बाँके र दाङ्ग )**

यस प्रदेशका तराइका जिल्लाहरुमा व्यवसायिक रुपमा खेती भएका सुगन्धित वनस्पतिहरु (मेन्था, क्यामोमाइल, लेमनग्रास, सिट्रोनेला आदि) तथा पहाडी क्षेत्रमा पाइनेरखेतीगरिने वनस्पतिहरु ( टिमुर,तेजपात, सुगन्धवाल, सुगन्धकोकिला आदि) को प्रशोधन पश्चात निर्यात गर्न सकेको खण्डमा स्थानीय स्तरमा रोजगारी श्रृजना हुनुका साथै मुल्यमा समेत अभिवृद्धि हुने छ ।

- यो कार्यक्रम बाँके र दाङ जिल्लामासञ्चालन गरिने,
- दाङ्ग र बाँके जिल्लामा पहिचान भएका सुगन्धित वनस्पतिहरुको पकेट क्षेत्रको सार्वजनिक स्थान या निजी जग्गामा जडिबुटी प्रशोधनकालागि Distillation Unit को स्थापना डिभिजन वन कार्यालय, स्थानीय तह र सरोकारवालाहरुको सहयोगमा गर्ने,
- प्रशोधन केन्द्रको स्थापनाका लागि व्यक्ति, समूह र सहकारीहरुबाट प्रस्तावहरु आह्वान गर्ने ।
- प्रशोधन केन्द्रको स्थापनाका लागि स्थान छनौट गर्दा खेती गरिएको जग्गाको क्षेत्रफल,स्थानीय कृषकको माग, यातायातको सुगमता, विद्युतको पहुँच आदि जस्ता विषयलाई आधार लिएर छनौट गर्ने,
- Distillation Unit का विज्ञ रसायन विद्, वनस्पति विद् तथा सम्बन्धित प्राविधिकको सहयोगमा लागत अनुमान तयार गरि सम्बन्धित उपभोक्ता समितीबाट प्रशोधन केन्द्रको निर्माण कार्य गर्ने,
- निर्माण कार्यको अनुगमन गर्ने कार्य सम्बन्धित निकायहरुबाट गरिने,
- कार्यक्रम सम्पन्न भए पश्चात  कार्य सम्पन्न प्रतिवेदन, प्राविधिक मूल्यांकन, जाँच पास र निर्मित भौतिक संरचनाको तस्वीरहरुको आधारमा भुक्तानी गर्ने,
- निर्माण कार्य सम्पन्न पश्चात स्थानीय तहको रोहबरमा सम्बन्धित समूहलाई सम्झौता गरी व्यवस्थापनको जिम्मेवारी दिने ।

**४३. प्रदेश स्तरीय उच्च प्रविधियुक्त बहुवर्षिय नर्सरी स्थापना तथा सञ्चालन**

वर्षैभरी विरुवाहरु उपलब्ध गराउने उदेश्यले उच्च प्रविधीयुक्त स्थायी प्रकृतिको नर्सरी निर्माण गरिनेछ । यस्तो प्रकारको नर्सरी प्राविधिक रुपले उत्कृष्ट हुनुको साथै बारबेर, Drainage, Sprinkle सहितको सिंचाइ, पानी टंकी, स्थायी छहारी, स्टोर, हरेक बेडमा ट्यागिङ आदीको व्यबस्था हुनुपर्नेछ । नर्सरी वरीपरि फुल रोपी रमणीय वातावरण बनाउनुको साथै विश्राम स्थल/गोलघर समेत बनाउन सकिने छ ।




सचिव

- डिभिजन वन कार्यालयले भौगोलिक वनौट, पानीको सुविधा, यातायातको पहुच, वस्तीको नजिक जस्ता विषयवस्तुलाई आधार लिइ उपयुक्त क्षेत्र छनौट गर्ने,
- डिजाइन तथा लागत अनुमान तयार गरी प्रचलित कानून वमोजिम नर्सरी स्थापना गर्ने,
- नर्सरी स्थापना हुने क्षेत्र सामुदायिक वन क्षेत्र वा राष्ट्रिय वन क्षेत्र वा सार्वजनिक क्षेत्रमा हुन सक्ने,
- मन्त्रालय र वन निर्देशनालयबाट कार्यक्रमको अनुगमन गर्ने,
- कार्यसम्पन्न भए पश्चात जाँचपास प्रतिवेदन, अनुगमन प्रतिवेदन कृयाकलापको फोटो उल्लेख गरी कार्यसम्पन्न प्रतिवेदन पेश गर्नुपर्नेछ ।

**४४. वन्यजन्तु उद्धार केन्द्र स्थापना**

नेपालमा वन संरक्षणको प्रभावकारीता सँगै वन्यजन्तुको संख्यामा उल्लेख्य वृद्धि भइरहेको अवस्था छ । वन्यजन्तुहरुको वृद्धिसँगै समय समयमा केहि वन्यजन्तुहरु घाइते हुने, टुहुरा हुने, अशक्त हुने र केहि वन्यजन्तुहरुले जनमानसमा समस्या उत्पन्न गर्ने क्रम वढ्दै गएको अवस्थामा त्यस्ता समस्याग्रस्त, घाइते, टुहुरा, अशस्त अवस्थाका वन्यजन्तुको उद्दार, उपचार र व्यबस्थापन कार्य जरुरी भएकोले प्रदेश नं. ५ मा एउटा वन्यजन्तु उद्दार केन्द्र स्थापना गरिनेछ ।

- यस कार्यको लागि वन्यजन्तु उद्दार केन्द्रलाई आवश्यक पर्ने उपचार कक्ष, Encloser, औषधी कक्ष, ल्याब, क्लीनिक समेत भएको भौतिक संरचना निर्माण गरिने,
- यसका लागि कुनै संरक्षणमुखी संस्था, सामुदायिक वन उपभोक्तासमूह वा साझेदार संस्थासँग सहकार्य गर्न सकिने,
- वन निर्देशनालयले डिभिजन वन कार्यालय, स्थानीय उपभोक्ता समूह, स्थानीय तहसँग समन्वय गरी वन्यजन्तु उद्दार केन्द्र निर्माणकालागि स्थान छनौट गर्ने,
- केन्द्र स्थापना हुने स्थान राष्ट्रिय वन क्षेत्र वा संरक्षित वन क्षेत्र वा समुदायद्वारा व्यवस्थित वन क्षेत्र वा स्थानीय तहले उपलब्ध गराएको पर्ती ऐलानी क्षेत्र मध्येबाट छनोट गर्नुपर्ने,
- स्थान छनोट भइ सकेपछि वन निर्देशनालयले प्राविधिकको सहयोगमा उद्दार केन्द्रको डिजाइन, लागत अनुमान र कार्य सुची तयार गरी स्वीकृत गर्ने र सार्वजनिक खरिद प्रकृया अपनाइ खुला बोलपत्र आव्हान गरी छनोटमा परेका निर्माण व्यबसायीसँग संझौता गरी कार्यादेश दिने,
- निर्माण व्यवसायीले स्वीकृत डिजाइन बमोजिम उद्दार केन्द्र तयार गर्नुपर्ने,
- उद्दार केन्द्र स्वीकृत डिजाइन अनुसार हुनुपर्ने,
- कार्यक्रम सम्पन्न भइसकेपछि निर्माण व्यबसायीले स्पष्ट फोटो र गरेका कृयाकलापहरु खुल्ने गरी प्रतिवेदन पेश गर्नुपर्नेछ ।

**४५. कृषि वन प्रवर्धनका लागि अनुदान सहयोग**

निजी क्षेत्र, सार्वजनिक क्षेत्र तथा हैसियत कम भएका वन क्षेत्रमा जमिनको उत्पादकत्वमा सुधार ल्याउन तथा स्थानीय जनताको आय आर्जनमा सहयोग पुर्‍याउने उदेश्यले यो कार्यक्रम संचालन गरिनेछ ।

- डिभिजन वन कार्यालयहरुले आफ्नो कार्य क्षेत्र भित्र निजी जग्गा/सार्वजनिक जग्गा/हैसियत कम भएका वन क्षेत्रमा वन ऐन नियमको परिधिमा रहि स्थान र समुह/व्यक्ति पहिचान तथा छनौट गर्ने,




सचिव

- स्थान तथा समूह छनोट भएपछि वन प्राविधिकको सहयोगमा स्थलगत निरिक्षण गरी कृषि वाली र वन वाली उत्पादन गर्न सकिने प्रस्ताव तयार गर्ने र कार्यक्रमको संझौता गर्नुपर्ने,
- निजी वन धनी वा वन उपभोक्तासमूहले प्रस्ताव तथा कार्ययोजना बमोजिम वृक्षारोपण कार्य, गोडमेल कार्य, संरक्षण कार्य गरेको नियमित रुपमा अनुगमन गर्नुपर्ने,
- यस कार्यक्रमको लागि वन क्षेत्रबाट टाढा रहेका समूह वा घरधुरीलाई प्राथमिकता दिने,
- कार्यसम्पन्न भए पश्चात कार्यक्रम संचालन भएको स्थान, क्षेत्रफल, प्रजाती, कृयाकलाप, फोटो सहित उल्लेख गरी प्रतिवेदन पेश गर्नुपर्ने,
- कार्यसम्पन्न प्रतिवेदनका आधारमा नियम अनुसार समूहलाई अनुदान सहयोग उपलब्ध गराइनेछ ।

**४६.निजी वन प्रवर्द्धनका लागि अनुदान सहयोग**

डिभिजन वन कार्यालयहरु अन्तर्गत दर्ता रहेका वा नरहेका निजि वनहरूले रुख, विरुवा रोपी, हुर्काई निजि वन बनाई रहेको अवस्थामा निजहरुलाई प्रेरित गरी निजी वन प्रबर्द्धन गर्नका लागि यो कार्यक्रम सञ्चालन गरिने छ ।

- डिभिजन वन कार्यालय अन्तर्गत रहेका निजि वनहरुमा वृक्षारोपण, विरुवाको गोडमेल, वन सम्बर्द्धनका कार्य तथा वनको संरक्षण जस्ता कार्यहरु गर्नको लागि अनुदान सहयोग उपलब्ध गराउने,
- यसको लागि डिभिजन वन कार्यालयले मापदण्ड तयार गरी सोही बमोजिम निजि वन धनीहरु सँग संझौता गरी कार्य सम्पन्न गर्नु पर्ने,
- कार्यक्रम सम्पन्न पश्चात निजि वन र निजि वन धनीको नाम, ठेगाना, निजि वनको क्षेत्रफल, वृक्षारोपण, गोडमेल, वन सम्बर्द्धन आदि गरिएको विवरण, सो को फोटो, सूचक सहितका अन्य उपलब्धि र प्रभावकारिता सहितको प्रगति प्रतिवेदन तयार गर्नुपर्नेछ ।




सचिव

## परिच्छेद ३
## वातावरण तथा जलवायु

**१. इको क्लब गठन तथा परिचालन**

यो कार्यक्रम डिभिजन वन कार्यालय मार्फत सञ्चालन गरिनेछ । जिल्लामा रहेका माध्यमिक तहका सामुदायिक विद्यालयहरुमा वातावरण र जैविक विविधता सम्वन्धि ज्ञान दिनु यस कार्यक्रमको मुख्य उद्देश्य रहनेछ ।

- विद्यालयहरुमा वातावरण र जैविक विविधता सम्वन्धि कक्षा सञ्चालन गरी इकोक्लव गठन गर्ने,
- इको क्लवको निरन्तरता तथा संरक्षणको लागि एक जना संरक्षक शिक्षकको चयन गर्ने,
- यस कार्यक्रम अन्तरगत इको क्लबमा आवद्द भएका माध्यमिक तहका सामुदायिक विद्यालयहरुका विद्यार्थीहरुमाभ्क वन वातावरण, जैविक विविधता सम्वन्धि कक्षा सञ्चालन, छलफल, वृक्षारोपण, सरसफाई तथा क्लवका सदस्यहरुलाई अवलोकन भ्रमण, वन वातावरण सचेतनाका लागि इको क्लवद्वारा सडक नाटक जस्ता कार्यहरु गर्न सकिने,
- यस कार्यक्रमको लागि विनियोजित रकम इको क्लवका सदस्यहरुको लागि स्टेशनरी, कार्यक्रम सञ्चालनको लागि खाजा खर्च, जस्ता कार्यमा खर्च गर्न सकिने वा इकोक्लव सञ्चालनका लागि नगद अनुदान उपलब्ध गराउन सकिने,
- कार्यक्रम सम्पन्नपश्चात निम्न विषयहरु समावेश भएको कागजातहरु पेश गर्नु पर्नेछ
  - कार्यक्रम सञ्चालन भएको विद्यालयको नाम, ठेगाना, गठन गरीएको इको क्लव संख्या (एउटै विद्यालयमा एक भन्दा बढी इको क्लब गठन भएमा मात्र), इको क्लबका पदाधिकारीहरुको नामावली, इको क्लव गठन तथा परिचालन कार्यक्रम अन्तर्गत गरिएका मुख्य मुख्य कार्यहरुको विवरण, इको क्लव गठन तथा परिचालनबाट पर्न गएको सकारात्मक प्रभावहरु, खर्चको विल भरपाईहरु, सान्दर्भिक तस्वीरहरु ।

**२. जलबायु अनुकुलित गाउँ योजना निर्माण र कार्यान्वयन (१२ जिल्ला)**

यो कार्यक्रम डिभिजन वन कार्यालय मार्फत सञ्चालन गरिनेछ ।

- जलवायु अनुकुलन गाउँ योजना निर्माणको लागि स्थान छनौट गर्दा सरोकारवालाहरुको समन्वय र सहयोगमा जलवायु परिवर्तनका कारणले अति प्रभाव पारेको र पार्न सक्ने सम्भावना रहेको क्षेत्र छनौट गर्नु पर्ने,
- जलबायु अनुकुलन गाउँ योजना तयार भै लागु गरिएको क्षेत्र रहेको र सो कार्यान्वयन गर्नु पर्ने अवस्था भएमा गाउँ योजना कार्यान्वयन गर्न सकिने,
- डिभिजन वन कार्यालयले यस कार्यक्रमको कार्यसूची (TOR) स्वीकृत गरी प्रचलित ऐन नियम तथा संघीय कार्यविधिको परिधि भित्र रहि सेवा प्रदायक संस्था छनौट गरी छनौट भएको सेवा प्रदायक संस्था सँग सम्भ्कौता गरी जलबायु अनुकुलन गाउँ योजना निर्माण र कार्यान्वयन गर्ने,
- सम्भ्कौतामा निम्न विषयहरु समावेश भएको हुनु पर्नेछ ।
  - ✓ जलवायु अनुकुलन गाउँ योजना निर्माण र कार्यान्वयन गरिने क्षेत्रको विवरण



प्रदेश सरकार वन तथा वातावरण मन्त्रालय प्रदेश नं.५ बुटवल, नेपाल

सचिव

- ✓ जलबायु अनुकुलन गाउँ योजना निर्माणरकार्यान्वयनको कार्य शुरु गरिने मिति
- ✓ कार्य सम्पन्न गर्नुपर्ने अन्तिम मिति
- ✓ सेवा प्रदायकलाई कार्यक्रमको भुक्तानी दिने सम्बन्धि व्यवस्था

**३. जलबायु परिवर्तनले पारेको प्रभाव बारे अध्ययन तथा अनुसन्धान**

- प्रदेश भित्रको वन क्षेत्र, कृषि प्रणाली, जलाधार क्षेत्र तथा जैविक विविधतामा जलबायु परिवर्तनले पारेका प्रभावबारे अध्ययन तथा अनुसन्धान गर्ने,
- वन अनुसन्धान तथा प्रशिक्षण केन्द्रले यस कार्यका लागि कार्यसुची तयार गर्ने, सेवा प्रदायक छनोट गर्ने, संम्झौता गर्ने, अध्ययन कार्यमा सहयोग गर्ने, अनुगमन गर्ने कार्य गर्नुपर्ने,
- कार्य सम्पन्न भए पश्चात सेवा प्रदायक संस्थाले प्रस्तुतीकरण गर्ने, मस्यौदा प्रतिवेदन पेश गर्ने र अन्तिम प्रतिवेदन पेश गर्ने,
- विभिन्न स्थानहरुमा अनुसन्धान प्लटहरु स्थापना गरि Long term अध्ययन तथा अनुसन्धान समेत गर्ने ।

**४.जैविक विविधता संरक्षण सचेतना गोष्ठी**

स्थानीय जनस्तर सम्म जैविक विविधताको महत्व तथा तिनको संरक्षण सम्बन्धी व्यापक रुपमा जन चेतना फैलाउने उद्देश्यले यो कार्यक्रम सञ्चालन गरिने छ ।

- मन्त्रालय अन्तर्गतको वन व्यवस्थापन तथा जैविक विविधता महाशाखाबाट एक दिने गोष्ठी सञ्चालन गर्ने,
- गोष्ठी तीन स्थानमा सञ्चालन गर्ने,
- जैविक विविधताको महत्व तथा संरक्षण सम्बन्धी विविध पक्षहरूको वारेमा स्थानीय सरोकारवालाहरू विच सञ्चालन हुने सचेतना गोष्ठीमा कम्तिमा २/२ वटा कार्यपत्रहरु प्रस्तुत गरि व्यापक छलफल गर्ने,
- गोष्ठीमा उठेका सवाल तथा सुझावहरुलाई टिपोट गरि गोष्ठीका विविध पक्षलाइ समेटी एक प्राविधिक प्रतिवेदन तयार गरिने छ ।

**५. जैविक श्रोत तथा वनस्पतिको परम्परागत ज्ञानको अभिलेखिकरण**

प्रदेश भित्रका विशेष गरेर मगर र थारु समुदायमा रहेको वनस्पति श्रोतको प्रयोग सम्बन्धी ज्ञान एक पुस्ता वाट अर्को पुस्तामा हस्तान्तरण हुन नसक्दा दिन प्रति दिन त्यस्तो ज्ञान लोप भैरहेको छ ।प्राय: आफूसँग भएको ज्ञान अरुलाइ नवताउने प्रवृत्ति रहेको कारणले गर्दा महत्वपुर्ण जैविक श्रोतको प्रयोग सम्बन्धी ज्ञान हराएर जाने सम्भावना प्रचुर रहेको वर्तमान परिप्रेक्ष्यमा यस कार्यक्रमको माध्यमबाट यस प्रदेशका मगर, थारु लगायतका समुदायहरुको विद्यमान ज्ञान अभिलेख भई संरक्षण तथा सदुपयोग हुने लक्ष्य रहेको छ ।

- वन अनुसन्धान तथा प्रशिक्षण केन्द्रवाट यो कार्यक्रम सञ्चालनगरिने,
- यस प्रदेशका प्रमुख जनजाति मगर तथा प्रमुख आदिवासी थारु समुदायहरुले परम्परागत रुपमा प्रयोग गर्ने वनस्पतिहरुको अभिलेख गर्ने,




सचिव

- अभिलेखिकरण कार्यक्रम तराइका जिल्लाहरु कपिलवस्तु, दांग तथा वर्दिया र पहाडी जिल्लाहरु पाल्पा र रोल्पामा अध्ययन गर्ने,
- अध्ययन कार्यका लागि उपयुक्त कार्य शर्त (TOR) तयार गरि प्रचलित कानून अनुसार सेवा प्रदायक छनौट गर्ने,
- सम्झौता पश्चात सेवा प्रदायकवाट सम्वन्धित समुदायहरुमा विविध अन्तरक्रिया कार्यक्रमहरु सञ्चालन गर्ने,
- अन्तरकृया कार्यक्रमहरु प्रत्येक जिल्लाका कम्तिमा ८ स्थानहरुमा स्थानीय वनस्पति प्रयोगकर्ताहरुको संलग्नतामा गर्नु पर्ने,
- परम्परागत ज्ञानका धनि व्यक्तिहरुलाइ विशेष ध्यान दिएर अधिकतम सुचना र जानकारीहरु लिनु पर्ने,
- सेवा प्रदायक संस्थाले अन्तिम प्रतिवेदन तयार गर्दा फिल्डमा गरेका क्रियाकलापहरुलाई समेटी वनस्पतिहरुको Family, Botanical Name, Local name, Habit, Status, Parts used, Uses, Mode of Use, dose of use, etc को विवरण राखी तयार गर्नु पर्ने ।

### ६. डोमेस्टिकेसन तथा जर्मप्लाज्म संरक्षण

यो कार्यक्रम वनस्पति अनुसन्धान केन्द्र, वाँकेको सहयोगमा डिभिजन वन कार्यालय वाँके मार्फत संचालन गरिनेछ ।

- खान योग्य जंगली विरुवाहरु पहिचान गरी ढकेरी वनस्पति उद्यानमा जर्मप्लाज्म संकलन गर्ने,
- संकलित जर्मप्लाज्महरुको उपयुक्त खेती प्रविधि विकास गर्नका लागि .विभिन्न प्लटहरु तयार गरि अनुसन्धान गर्ने,
- अनुसन्धान पश्चात अन्तिम प्रतिवेदन तयार गर्ने,
- प्रतिवेदनको भाषा नेपाली हुनुपर्ने

### ७. विश्व वातावरण/अन्तराष्ट्रिय जैविक विविधता /सिमसार दिवस

- मन्त्रालय, वन निर्देशनालय, डिभिजन वन कार्यालयहरु मार्फत विश्व वातावरण, सिमसार दिवस तथा अन्तराष्ट्रिय जैविक विविधता दिवस विभिन्न सचेतनामुलक गोष्ठी, अन्तर्क्रिया तथा वृक्षारोपण सरफाइ कार्यक्रमहरु विभिन्न सरोकारवालाहरुको संलग्नतामा सञ्चालन गरिनेछ ।

### ८.सफा वातावरण स्वस्थ्य जीवन अभियान

नेपालको संविधान धारा ३० अनुसार स्वच्छ वातावरणको हकको व्यवस्था गरेको छ । जसमा प्रत्येक नागरिकलाइ स्वच्छ र स्वस्थ वातावरणमा वाँच्न पाउने हक हुनेछ। वातावरणीय प्रदुषण वा ह्रासवाट हुने क्षतिवापत पीडितलाइ प्रदुषकवाट कानून वमोजिम क्षतिपूर्ति पाउने व्यवस्था गरेको छ । त्यस्तै राष्ट्रको विकास सम्वन्धी कार्यमा वातावरण र विकास विच समुचित सन्तुलनका लागि आवश्यक कानूनी व्यवस्था गर्न वाधा पुऱ्याएको मानिने छैन भनि उल्लेख भएको छ। यिनै हक अनुसार यस प्रदेश लाइ पनि स्वच्छ र सुन्दर वनाइ यस प्रदेशका नागरिकलाई स्वस्थ जीवनमा वाँच्ने गतिविधी सञ्चालन गर्न आवश्यक रहेको छ ।

सचिव






Scanned by CamScanner

- मन्त्रालय तथा मातहतका निकायहरु मार्फत १२ वटै जिल्लामा विभिन्न गतिविधिहरु सञ्चालन गर्ने,
- सडक पेटिको छेउछाउको झाडी सरसफाई, बृक्षारोपण, विश्राम स्थल निर्माण, प्लाष्टिक झोलाको विकल्पमा कपडा झोला प्रयोग गर्न प्रोत्साहन, डस्टविन, प्रचार प्रसार, सरसफाई अभियान, वातावरण सम्वन्धी स्कूल शिक्षा कार्यक्रम आदी जस्ता क्रियाकलाप सञ्चालन गर्न सकिने छ ।

**९. साइटिस वनस्पति तथा वन्यजन्तुको अध्ययन तथा अभिलेखिकरण**

दुर्लभ वन्यजन्तु तथा वनस्पतिहरुको अन्तर्राष्ट्रिय व्यापार सम्वन्धी महासन्धी–CITES(साइटिस) मा रहेका तिन वटा अनुसुचीमा नेपालका २२० वटा वन्यजन्तु तथा ४७४ वटा वनस्पतिहरु सुचीकृत भएता पनि यस प्रदेश भित्र के कति कस्तो अवस्थामा साइटिस अनुसुचित विरुवा छन भन्ने एकिन गर्नका लागि यो कार्यक्रम सञ्चालनगरिनेछ ।

- संवन्धित कार्यालयले अध्ययन कार्यका लागि उपयुक्त कार्य शर्त (TOR) तयार गरि प्रचलित कानून अनुसार सेवा प्रदायक छनौट गर्ने,
- अध्ययन कार्यका लागि सम्वन्धित निकायले कार्य क्षेत्रगत शर्त तयार गर्दा सम्भवना भएका जिल्लाहरु उल्लेख गर्नु पर्ने तथा अध्ययन सोहि जिल्लाहरुमा केन्द्रित हुने,
- अध्ययन कार्यका लागि सम्झौता पश्चात सेवा प्रदायकवाट विस्तृत रुपमा वानस्पतिक तथा वन्यजन्तु सर्भेक्षण गर्नुपने,
- अध्ययनको क्रममा सम्वन्धित निकायवाट अनुगमन गर्नुपर्ने,
- साइटिस अनुसुचित वनस्पति/जनावरहरुको Habitat status अध्ययन गरि फोटो सहित हर्वेरियम तयार गर्नु पर्ने तथा वन्यजन्तुका लागि तस्विरहरु आवश्य पर्ने,
- सेवा प्रदायकले अन्तिम प्रतिवेदन तयार गर्दा फिल्डमा गरेका क्रियाकलापहरुलाई समेटी तपशिलका विवरणहरु राखी तयार गर्नु पर्नेछ ।
    - ✓ साइटिस अनुसुचित वनस्पति तथा वन्यजन्तु पाइएको स्थानरक्षेत्रको अवस्थिति नक्सा
    - ✓ साइटिस अनुसुचित वनस्पति र वन्यजन्तुको विस्तृत विवरण फोटो सहित
    - ✓ साइटिस अनुसुचित वनस्पति र वन्यजन्तुको वास स्थानमा हालको अवस्था, आसपासका वनस्पति तथा वन्यजन्तुहरुको विवरण
    - ✓ साइटिस अनुसुचित वनस्पति र वन्यजन्तुको संरक्षणका लागि गरिनु पर्ने कार्यहरु तथा सुझावहरु
    - ✓ वनस्पति र वन्यजन्तुका लागि छुट्टाछुट्टै प्रतिवेदन हुनु पर्ने
    - ✓ सान्दर्भिक तस्वीरहरु

**१०. सिमसार क्षेत्रमा रहेका वनस्पतिहरुको अध्ययन तथा अभिलेखिकरण**

- संवन्धित कार्यालयवाट यस कार्यका लागिसिमसार क्षेत्रहरु छनौट गर्ने,
- लागत अनुमान र कार्य क्षेत्रगत शर्त तयार गरि सेवा प्रदायक छनौट गर्ने, संझौता गर्ने,
- विस्तृत अध्ययन र अभिलेखीकरण गर्ने,



उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय प्रदेश सरकार प्रदेश नं.५ बुटवल, नेपाल

सचिव

- अध्ययन गरिएका सिमसार क्षेत्रहरुबाट हर्वेरियम नमूनाहरु समेत संकलन गर्नुपर्ने,
- कार्यसम्पन्न भए पश्चात प्रस्तुतीकरण गर्ने र सुझावहरु संकलन गरी अन्तिम प्रतिवेदन तयार गरी पेश गर्नुपर्नेछ ।

**११.आकस्मिक पहिरो व्यवस्थापन तथा नदी खोला नियन्त्रण**

- आकस्मिक रूपमा पहिरो जाने तथा नदी कटान हुन सक्ने क्षेत्रहरूको पहिचान गरी सूचीकरण (अभिलेखीकरण) गर्ने,
- त्यस क्षेत्रको अवस्था र हुन सक्ने संभावित क्षतिको वारेमा सम्वन्धित निकायहरुबाट सुचना संकलन गरी प्रोफाइल तयार गर्ने,
- आकस्मिक रुपमा पहिरो र नदी कटान भई गाउ वस्ती र राष्ट्रिय महत्वका संरचनामा जोखिम हुने अवस्था आएमा तत्काल राहत/न्यनिकरणको लागि निर्माण सामग्री उपलब्ध गराउने व्यवस्था गर्ने,
- भू तथा जलाधार व्यवस्थापन कार्यालयबाट लागत अनुमान तयार गरि सम्वन्धित उपभोक्ता समूह/उद्दारमा खटिएका सुरक्षाकर्मी/अमानत मार्फत संरक्षण तथा व्यवस्थापन सम्वन्धि संरचना तयार गर्ने,
- कार्य सम्पन्न भइ सकेपछि कार्यक्रम झल्कने फोटो संलग्न राखी प्रतिवेदन तयार गर्नुपर्नेछ ।

**१२.एक गाउँ एक पोखरी निर्माण अभियान सञ्चालन**

यो कार्यक्रम प्रदेश नं ५ मा एक गाउँ एक पोखरी निर्माणको रुपमा अगाडि वढाईनेछ

- पोखरी निर्माणको लागि सम्भावित स्थान पहिचान गर्न सम्वन्धित स्थानीय तहसँग समन्वय गरिस्थानीय तहको समन्वयमा स्थान छनौट गर्ने,
- स्थान छनौट गर्दा सार्वजनिक ऐलानी, पर्ति क्षेत्र, परम्परागत साना पोखरी भएका क्षेत्रलाई प्राथमिकता दिने, त्यस्तो स्थान नभएमा सामुदायिक वन, राष्ट्रिय वन क्षेत्रमा रूखविरूवाहरू नभएको क्षेत्र छनौट गर्ने,
- स्थान छनौट पश्चात प्राविधिकको सहयोगमा लागत अनुमान तथा डिजाईन तयार गर्ने,
- स्थानीय तहले पोखरी निर्माणमा थप रकम उपलब्ध गराउने भएमा लागत अनुमान तयार गर्दा सो उल्लेख गर्नुपर्ने,
- स्थानिय तहको प्राविधिक सहयोग तथा समन्वयमा सम्वन्धित उपभोक्ता समितिबाट पोखरी निर्माण कार्य सम्पन्न भै सके पश्चात सो को सवै विवरण खुलेको एक होर्डिङ वोर्ड राख्ने र प्राविधिक जांचपास र कार्य सम्पन्न प्रतिवेदनको आधारमा रकम भुक्तानी गर्ने,
- पोखरी निर्माण पश्चात सवै कृयाकलाप झल्कने विवरण उल्लेख गरी प्रतिवेदन तयार गर्ने ।

**१३. चुरे पहाड सौन्दर्यीकरण प्रवर्द्धन कार्यक्रम**

यस प्रदेशका चुरे पर्वतहरुमा हरियाली प्रवर्द्धन गरी चुरे संरक्षण गर्ने लक्ष्य यो कार्यक्रमको रहेको छ ।

- संवन्धित कार्यालयबाट चुरे क्षेत्रमा संरक्षण पोखरी निर्माण, चुरे क्षेत्रमा हुर्कन सक्ने वहुवर्षिय, वहुउद्देश्यीय, शोभनिय, सदावहार विरूवाहरू रोपण गर्ने,
- पुनरुत्पादन वृद्धि हुने क्रियाकलापहरु संचालन गर्ने,






सचिव

- वन डढेलो नियन्त्रण सम्बन्धि क्रियाकलापहरु संचालन गर्न सकिने,
- चरिचरण वन्द गर्ने, वायो इन्जिनियरिंग प्रविधी अपनाउने लगायतका कृयाकलापहरू सञ्चालन गर्ने,
- कार्यक्रम सम्पन्न भए पश्चात सवै कृयाकलापहरूको फोटो देखिने गरी प्रतिवेदन तयार गर्ने ।

**१४.ताल तलैया तथा सिमसार क्षेत्रहरुको संरक्षण**

जैविक विविधता, सांस्कृतिक तथा धार्मिक महत्व र पर्यटकीय सम्भावना समेत भएका तालतलैया र सिमसार क्षेत्रहरूको नक्शांकन र अभिलेखीकरण गरि प्राथमिकताको आधारमा क्रमशः जिर्णोद्वार, संरक्षण र व्यवस्थापनका कृयाकलाप गरिनेछ ।

- संवन्धित कार्यालयबाट लागत अनुमान तयार गरि उपभोक्तासमूह मार्फत सञ्चालन गर्ने,
- संबन्धित कार्यालयले स्थान छनोट गरी समूह सँग संझौता गर्ने, अनुगमन गर्ने, प्रतिवेदन तयार गर्ने,
- स्थान छनोट गर्दा जिल्लामा रहेका सामुदायिक वन उपभोक्तासमूह वा अन्य सरोकारवाला समूह मार्फत समूहको क्षेत्र भित्र रहेको ताल तलैया तथा सिमसार क्षेत्रहरुको संरक्षणको लागि यो कार्यक्रम सञ्चालन गर्ने,
- स्थान छनौट गर्दा पूर्ववत रुपमा रहेको ताल तलैया तथा सिमसार क्षेत्र छनौट गर्ने,
- यस कार्यक्रमको लागि नयाँ सिमसार क्षेत्र निर्माण नगर्ने,
- सिमसार क्षेत्रको संरक्षणको लागि रुख विरुवा हानी नोक्सानी हुन नदिने,

**१५.वनस्पति उद्यान निर्माण : बुटवल र नेपालगञ्ज**

जैविक विविधता महासन्धी १९९२ को मूख्य उद्देश्य जैविक विविधता संरक्षण तथा जैविक विविधताको दिगो उपयोग रहेको छ । वानस्पतिक विविधताको स्व-स्थानीय तथा पर-स्थानीय संरक्षण र सम्वर्धन मार्फत उक्त उद्देश्य हाँसिल गर्नको लागि सरकारद्वारा तोकिएको क्षेत्र वनस्पति उद्यान हो। वनस्पति उद्यानको प्रमुख उदेश्यमा दुर्लभ, लोपोन्मुख, रैथाने, आर्थिक, सामाजिक तथा वैज्ञानिक दृष्टिकोणले महत्वपूर्ण वनस्पति प्रजातीहरुको स्व-स्थानीय तथा पर-स्थानीय संरक्षण, तिनीहरुको सदुपयोगको लागि अनुसन्धान, यस सम्वन्धि जनचेतना अभिवृद्धि पर्दछन् । विभिन्न पारिस्थितिकीय प्रणालीहरुको संरक्षण गरी पर्या-पर्यटनको विकास मार्फत स्थानीय समूदायको आर्थिक अवस्थामा सुधार ल्याउनु वनस्पति उद्यानले महत्वपुर्ण भूमिका खेल्दछ । त्यसैगरी वनस्पति उद्यानलाई अध्ययन तथा अनुसन्धान केन्द्रको रुपमा विकास गरिनु पर्दछ ।

- यस कार्यकम अन्तर्गत बुटवल र नेपालगन्जमा वनस्पति उद्यान निर्माण गरिनेछ ।
- यस शिर्षकमा विनियोजित रकम स्वीकृत गुरुयोजना भए सोहि वमोजिम, गुरुयोजना नभएमा विस्तृत परियोजना प्रतिवेदन तयार गर्न र सो बमोजिमका कृयाकलापहरुमा खर्च गर्न सकिने,
- वनस्पति उद्यान सम्वन्धी मापदण्ड अनुसार सम्वन्धित स्थानीय तहसँग समन्वय गरी स्थान छनौट गरिनेछ । स्थान छनौट सकभर वन क्षेत्र वाहिर गरिने छ । कुनै कारणवस वन क्षेत्रमा नै स्थापना गर्नु पर्ने भएमा हैसियत विग्रिएको वनमा स्थान छनौट गरिने छ । वनस्पति उद्यान स्थापनाका लागि कम्तिमा ५ हेक्टर जग्गा हुनुपर्ने छ ।




सचिव

- स्थान छनौट भई सकेपछि वनस्पति उद्यान सम्वन्धी विज्ञहरू र इन्जिनियरको प्राविधिक टोलीले स्थलगत अवलोकन गरी उद्यानको डिजाइन तयार गर्ने
- लागत अनुमान तयार गरी सार्वजनिक खरिद ऐन र नियमावली अनुसार उद्यान निर्माण गर्ने,
- निर्माणाधिन उद्यानको समय समयमा मन्त्रालय, वन निर्देशनालय, स्थानीयतह तथा सम्वन्धित कार्यालयबाट अनुगमन तथा निरिक्षण गर्ने,
- उद्यान निर्माण कार्य सम्पन्न पश्चात सम्वन्धित स्थानीय तहलाई उक्त उद्यानको संरक्षण तथा व्यवस्थापनका लागि हस्तान्तरण गर्ने ।

**१६. शहरी वन प्रवर्द्धन तथा नगर वन उद्यान निर्माण कार्यक्रम**

शहर र नगर क्षेत्र नजिक रहेका सरकारी, खाली, पर्ति, चौर, सडक छेउ किनारमा हरीयाली कायम गर्न विश्राम स्थल निर्माण गरी मानिसहरुलाई मनोरम वातावरण प्रदान गर्न एवम् शहरी क्षेत्रको वायु/ध्वनी प्रदुषण न्यूनिकरणमा सहयोग गर्ने उद्देश्यले यो कार्यक्रम संचालन गरिनेछ ।

- स्थानीय तहसँगको समन्वय मार्फत उपयुक्त स्थान छनौट गर्ने,
- स्थानिय तह/अन्य सरकारी निकायको प्राविधिक सहयोगमा डिजाईन तथा लागत अनुमान तयार गरी प्रचलित सार्वजनिक खरिद ऐन र नियमावली अनुसार नगर वन उद्यानका संरचनाहरुको निर्माण कार्य सम्पन्न गर्ने,
- नगर वन निर्माण गरीने स्थानको सर्वेक्षण, नक्शांकन, डिजाइन, प्रत्यक्ष अवलोकन र स्थानीयसँग छलफल र सहकार्यमा गर्नुपर्ने,
- नगर वन उद्यान निर्माण कार्य सम्पन्न पश्चात संबन्धित स्थानीय तहलाई उक्त उद्यानको संरक्षण तथा व्यवस्थापनका लागि जिम्मेवारी दिने ।

**१७.संवेदनशिल र शहरी जलाधार क्षेत्र संरक्षण कार्यक्रम**

- उपल्लो टटीय र तल्लो टटीय अर्न्तसम्वन्धको अवधारणा अनुसार यो कार्यक्रम संचालन गर्ने,
- शहरी क्षेत्र (Down stream) लाई प्रभावित पार्न सक्ने जलाधार (Up stream) हरुको पहिचान गरी संवेदनशिलता र प्राथमिकरण गर्ने,
- यस्ता जलाधार क्षेत्रवाट शहरले प्राप्त गर्ने वातावरणीय सेवाको निरन्तरताको लागि आवश्यक पर्ने भू-संरक्षण तथा जलाधार व्यवस्थापनका कार्यक्रम संचालन गर्ने,
- स्थानीय तहसँग समन्वय गरी भू तथा जलाधार व्यवस्थापन कार्यालयबाट संवेदनशिल तथा शहरी जलाधार क्षेत्रको पहिचान गर्ने,
- सर्भे, डिजाइन, लागत अनुमान, सम्वन्धित उपभोक्ता समितिसँग संझौता गरी संरक्षण तथा व्यवस्थापन सम्वन्धि कार्य गर्ने,
- सम्वन्धित निकायवाट अनुगमन गर्ने,
- अन्तिम प्रतिवेदन तयार गरि तालुक निकायमा पेश गर्ने ।




सचिव

**१८.महत्वपुर्ण रैथाने वनस्पती र वन्यजन्तुको सर्वेक्षण तथा अभिलेखीकरण**

प्रदेश भित्र रहेका रैथाने वनस्पति तथा वन्यजन्तुहरुको अवस्थालाई एकिन गर्नका लागि यो कार्यक्रम सञ्चालन गरिने छ । प्रायः रैथाने जैविक विविधताको वासस्थान धेरै साँगुरो हुने हुँदा तिनीहरुको लोप हुने सम्भावना अन्यको भन्दा बढी हुने भएकोले अवस्था एकिन गरि संरक्षणका कार्यक्रमहरु संचालन गरिनुपर्दछ ।

- संबन्धित कार्यालयबाट यस कार्यका लागि उपयुक्तकार्य क्षेत्रगत शर्त तयारगर्ने,
- अनुसन्धान कार्य फूल फूल्ने वनस्पति तथा स्तनधारी र सरिसृप वर्गका वन्यजन्तुहरुको गर्ने,
- सेवा प्रदायक छनोट गर्ने, संझौता गर्ने,
- अध्ययन कार्यको आवश्यकता अनुसार अनुगमन गर्ने,
- सेवा प्रदायकले कार्य सम्पन्न भए पश्चात प्रस्तुतीकरण गर्ने, प्रतिवेदन तयार गरी पेश गर्ने लगायतका कार्यहरु गर्नेछ ।

सेवा प्रदायकले अन्तिम प्रतिवेदन तयार गर्दा फिल्डमा गरेका क्रियाकलापहरुलाइ समेटी तपशिलका विवरणहरुण राखी तयार गर्नु पर्नेछ ।

- ✓ रैथाने वनस्पति तथा वन्यजन्तु पाइएको स्थानरक्षेत्रको अवस्थिति नक्सा
- ✓ रैथाने वनस्पति र वन्यजन्तुको विस्तृत विवरण फोटो सहित
- ✓ रैथाने वनस्पति र वन्यजन्तुको वास स्थानमा हालको अवस्था ,आसपासका वनस्पति तथा वन्यजन्तुहरुको विवरण
- ✓ रैथाने वनस्पति र वन्यजन्तुको संरक्षणका लागि गरिनु पर्ने कार्यहरु तथा सुझावहरु
- ✓ वनस्पति र वन्यजन्तुका लागि छुट्टाछुट्टैप्रतिवेदन हुनुपर्ने
- ✓ सान्दर्भिक तस्वीरहरु




सचिव

# परिच्छेद ४

# विज्ञान तथा प्रविधि

१. प्रादेशिक विज्ञान प्रविधि प्रतिष्ठान (PAST) स्थापना तथा संचालन गर्ने ।

- राष्ट्रिय विज्ञान प्रविधि प्रतिष्ठान (NAST) को स्थलगत अवलोकन गरी आवश्यक जानकारी हासिल गरी PAST को भवन निर्माण गर्न भौतिक पुर्वाधार विकास मन्त्रालय सँग समन्वय गर्ने,
- PAST निर्माण गर्न सम्वन्धित सरोकारवालाहरुको संलग्नतामा उपयुक्त स्थान छनोट गर्ने,
- भौतिक पुर्वाधार  विकास मन्त्रालयबाट डिजाइन, लागत अनुमान तयार गर्ने,
- प्रचलित कानून वमोजिम निर्माणा कार्य गर्ने ।

२. Exhibition of Scientific Innovation कार्यक्रम संचालन

- यो कार्यक्रम मन्त्रालयको सम्वन्धित महाशाखाबाट संचालन हुने,
- यो कार्यक्रममा सहभागी हुन स्थानीय विद्यालय तथा क्यामपसहरुसगं समन्वय गर्ने,
- कुनै निर्धारित मितिमा वार्षिक रुपमा Exhibition संचालन गर्ने,
- विद्यालय तथा क्यामपसका विज्ञान संकायमा अध्ययनरत विद्यार्थीहरु तथा विज्ञान क्षेत्रमा कार्यरत वैज्ञानिकहरुलाई यस कार्यक्रमको बारेमा जानकारी गराउने,
- विज्ञान प्रविधिका बिभिन्न बिधाहरु जस्तै भौतिक शास्त्र, रसायन शास्त्र तथा जीव शास्त्र सम्वन्धी खोज, आविस्कारको प्रदर्शनी गर्ने,
- प्रदर्शनमा उत्कृष्ट नतिजा हासिल गर्नेलाई पुरस्कृत गर्ने तथा सहभागी भएका सामाग्री अभिलेखका लागि विज्ञान संग्रहालयमा हस्तान्तरण गर्ने ।

३. विज्ञान तथा प्रविधिको क्षेत्रमा आविस्कार, अध्ययन अनुसन्धानमा संलग्न व्यक्ति संस्थालाई प्रोत्साहन

- यो कार्यक्रम प्रादेशिक विज्ञान प्रविधि प्रतिष्ठानको समिति मार्फत संचालन गरिनेछ, सो प्रतिष्ठान निर्माण नभएसम्म यो कार्यक्रम मन्त्रालयको सम्वन्धित महाशाखाबाट संचालन हुने,
- समिति/मन्त्रालयले विज्ञान प्रविधि क्षेत्रमा योगदान पुऱ्याउने व्यक्तिका बारेमा खाजी गरी सुची तयार गर्ने,
- विज्ञान प्रविधिका बिभिन्न बिधाहरु जस्तै भौतिक, रसायन, तथा जीव शास्त्रमा भएका अध्ययन तथा आविस्कारहरुलाइ मापदण्ड तयार गरि मूल्यांकन गर्ने,
- वार्षिक कार्यक्रम आयोजना गरी उत्कृष्टलाई सम्मान गर्ने ।

४. विज्ञान संग्रहालय स्थापना संभाव्यता अध्ययन

- विज्ञान संग्रहालय स्थापनाको सम्भाब्यता अध्ययन कार्यक्रम मन्त्रालयको सम्वन्धित महाशाखाबाट संचालन हुने,
- विज्ञान संकायका विद्यार्थीहरुको सहज पहूँच भएको स्थान पहिचान गरि छनौट गर्ने,
- आवश्यक प्राविधिक सहयोग चाहिने भएकोले परामर्शदातासगं Request For Proposal-RFP लिने,



सचिव



- RFP को आधारमा अध्ययन गरि विज्ञान संग्रहालयको संभाव्यता पुष्टि गर्ने,
- RFP को आधारमा विज्ञान संग्रहालय निर्माण गर्न TOR तयार पारि वोलपत्र आव्हान गरी सेवा प्रदायक संस्था छनौटको माध्यमवाट अन्तिम प्रतिवेदन तयार गर्ने ।

५. प्लानेटरियम निर्माणको लागि विस्तृत संभाव्यता अध्ययन

- प्लानेटरियम निर्माणको विस्तृत सम्भाव्यता अध्ययन कार्यक्रम मन्त्रालयको सम्वन्धित महाशाखावाट संचालन हुने,
- प्लानेटरियम निर्माणको भौगोलिक स्थान छनौट गर्न अध्ययन गरी श्रोतको निर्धारण गर्ने जस्तै विद्यार्थी, वैज्ञानिक, अवलोकनकर्ताहरु, आदि
- प्लानेटरियमको क्षमता तथा लागत निर्धारण गर्ने,
- आवश्यक प्राविधिक सहयोगको लागि परामर्शदातासगँ RFP लिने,
- RFP को अध्ययनको आधारमा प्लानेटरियमको संभाव्यता पुष्टि गर्ने,
- RFP को आधारमा प्लानेटरियम निर्माण गर्न TOR तयार गर्ने र वोलपत्र आव्हान गरी सेवा प्रदायक संस्था छनोट गरी अध्ययन गर्ने ।

६. इ-गभर्नेन्स/ सफ्टवेयर निर्माण

नेपालको E-governance Masterplan अनुरुप सरकारी कार्यालयहरुलाई सूचना प्रविधि मैत्री वनाउने योजना अनुरुप यस मन्त्रालय तथा मातहतका कार्यालयहरुलाई सूचना प्रविधि मैत्री वनाउन E-governance masterplan को अवधारणा तयार गरी विद्युत्तीय शासनको लागि कार्यलय संचालन गर्न सुचना प्रविधिको प्रयोग गर्ने तथा आवश्यकता अनुरुप सफ्टवेयर खरिद अथवा निर्माण गरिनेछ ।यस मन्त्रालय तथा सम्वन्धित कार्यालयहरुलाई आवश्यक पर्ने सफ्टवेयर निर्माण गरिसके पश्चात कार्यालयको दैनिक कामकाज संचालनमा सो सफ्टवेयर उपयोग हुने हुनाले ति सफ्टवेयर संचालन गर्न आवश्यक सीप विकास गर्न कर्मचारीहरुलाई सफ्टवेयरको तालिम दिईनेछ ।

- E-governance Masterplan को अवधारणा अनुरुप TOR निर्माण गरिनेछ र सोहि TOR को आधारमा काम गर्न परामर्शदाता छनौट गर्ने,
- मन्त्रालय तथा मातहतका कार्यालयहरुको हालको सूचना प्रविधिको स्थिति पहिचान गरिनेछ साथै ति कार्यालयहरुलाई सूचना प्रविधि मैत्री वनाउन आवश्यक योजना तयार गर्ने,
- योजना अनुरुप आवश्यक पर्ने भौतिक पूर्वाधार, जनशक्ति तथा सफ्टवेयर खरिद अथवा निर्माण प्रक्रिया अगाडी वढाउने,
- सफ्टवेयर निर्माण गर्न TOR निर्माण गरिनेछ र सफ्टवेयर निर्माण कम्पनी छनौट गरी सफ्टवेयर निर्माणको सम्झौता गर्ने,

सचिव



# परिच्छेद ५

## पर्यटन

### १. पुर्वाधार निर्माण

- स्थान छनौटः
  - ✓ वार्षिक कार्यक्रममा स्थान नतोकिएका क्रियाकलापहरुका लागी स्थानीय तह लगायतका सरोकारवालाहरुको समन्वयमा उपयुक्त स्थानको छनौट गर्ने,
  - ✓ स्थान छनौट गर्दा सकेसम्म वन क्षेत्र वाहिर गर्ने,
  - ✓ समुहद्वारा व्यवस्थित वनमा कार्यक्रम संचालन गर्नु परेमा सम्वन्धित समुहको कार्य योजनामा उल्लेख भएको हुनु पर्ने, नभएमा संशोधन गर्ने तर वन क्षेत्रको जग्गा प्रयोग गरी रुख विरुवा हटाइ निर्माण कार्य नगर्ने,
  - ✓ वन क्षेत्रको जग्गा प्रयोग गरी रुख विरुवा हटाउन र वन क्षेत्रमा भौतिक पूर्वाधार निर्माण गर्ने कार्य गर्नु पर्ने भएमा प्रचलित संघीय कार्यविधि र कानूनी व्यवस्थाको पालना गर्ने ।
- अख्तियार प्राप्त निकायबाट सम्वन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- लागत अनुमान तयार गर्ने कार्य सम्वन्धित कार्यालयमा प्राविधिक कर्मचारी नभएको अवस्थामा जिल्ला स्थित भौतिक पुर्वाधार विकास मन्त्रालयको मातहतको निकाय निकाय वा स्थानीय तहका प्राविधिक मार्फत गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,
- प्रचलित कानून वमोजिम उपभोक्ता समूहबाट संचालन हुन सक्ने कार्यक्रमहरुको लागि प्रचलित कानून वमोजिम उपभोक्ता समिति गठन गरी कार्य संचालन गर्न सकिने,
- सम्वन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयवाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरि सम्वन्धित निर्माण व्यवसायी तथा उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,
- सामुदायिक वन क्षेत्रभित्र सञ्चालन हुने क्रियाकलापहरुको हकमा प्रचलित कानून वमोजिम सम्वन्धित सामुदायिक वन उपभोक्ता समूह मार्फत सञ्चालन गर्न सकिने,
- उपभोक्ता समितिको कार्यविधि देहाय वमोजिम हुनेछ ।
  - ✓ उपभोक्ता समिति कार्यकारी समिति हुनेछ ।
  - ✓ उपभोक्ता समितिले कार्यक्रम संझौता, संचालन, समन्वय, कार्य सम्पन्न गर्ने लगायतका सम्पूर्ण जिम्मेवारी वहन गर्नेछ ।
  - ✓ सम्पन्न कार्यको संचालनमा निरन्तरता, संरक्षण, सदुपयोग, तथा मर्मत संभार गर्ने कार्य जिम्मेवारी सम्वन्धित उपभोक्ता समूहको हुनेछ ।



सचिव



✓ सम्बन्धित प्राविधिक कर्मचारीको सल्लाह तथा सुझाव बमोजिम कार्य सञ्चालन गर्नेछ ।

- विनियोजित रकम स्वीकृत गुरुयोजना भए सोहि बमोजिम हुने तथा गुरुयोजना नभएमा विस्तृत परियोजना प्रतिवेदन/गुरुयोजना तयार गर्न र सो बमोजिमका क्रियाकलापहरुमा खर्च गर्न समेत सकिने छ ।

पुर्वाधार निर्माण सम्बन्धी देहाय वमोजिमका कार्यक्रम संचालन हुनेछन ।

✓ मालिका भगवती कम्पाउण्ड वाल तथा ब्लक छाप्ने, अर्घाखाची

✓ बल्कोट पौवाको संरक्षण, अर्घाखाची

✓ आन्तरिक धार्मिक पर्यटन प्रर्वद्धनका लागि मालिका भवानी मन्दिरमा पूर्वाधार विकास तथा सौन्दर्यिकरण बन्डौली, कपिलवस्तु

✓ कमल दह संरक्षण तथा सौन्दर्यिकरण, रुकुम

✓ थर्कोट तुलसीपुरमा भ्यू टावर निर्माण, दाङ्ग

✓ देवदह संरक्षण तथा पूर्वाधार विकास, रुपन्देही

✓ प्राचीन दुर्गा मन्दिर क्षेत्रमा पार्क निर्माण तथा सौन्दर्यकरण कशर मार्ग वाणगंगा ८, कपिलवस्तु

✓ पाणिनी तपोभूमि क्षेत्रको पूर्वाधार निर्माण, अर्घाखाँची

✓ वुद्धताल संरक्षण तथा सौदर्यीकरण, नवलपरासी

✓ वराह देवता मन्दिर पूर्वाधार निर्माण गयामुक्तिधाम सेमलार, रुपन्देही

✓ मर्चेश्वरी मन्दिर संरक्षण तथा पूर्वाधार निर्माण, रुपन्देही

✓ मामेशती सवरीया मन्दिर परिसरमा पर्यटकीय पूर्वाधार निर्माण सुनवल ११, नवलपरासी

✓ लक्ष्मणघाट धाम/घाट व्यवस्थापन तथा सुदृढीकरण, कपिलवस्तु

✓ लक्ष्मीनारायण मन्दिर जिर्णोद्धार हुँगी रम्भा-१, पाल्पा

✓ श्रीकृष्ण मन्दिर धार्मिक वन क्षेत्र उद्यान निर्माण, दाङ्ग

✓ शिवालय मन्दिर निर्माण- सुनटाकुरा पोखराथोक, अर्घाखाची

✓ सतखलुवा ताल छेउमा पार्क पिकनिक स्पट र भ्यू टावर निर्माण,बर्दिया

✓ हडियावावा कुटी निर्माण जानकी गा पा-५ बाँके

✓ दशै घर पून:निर्माण तथा मर्मत पाणिनी-२, अर्घाखाँची

✓ अर्जुनभगवती मन्दिरको पर्यटकीय क्षेत्र ब्यवस्थापन रेसुङ्गा ७, गुल्मी

✓ जलजला क्षेत्रमा पदमार्ग निर्माण/हिलस्टेसन, रोल्पा

✓ यार्सा पदमार्ग तथा आवास भवन निर्माण, रुकुम

✓ विजुवार क्षेत्रमा पार्क र पिकनिक स्पट निर्माण, प्युठान

✓ राजा मणिमुन्दसेन र कर्णेल उजिर सिंहको को पूर्णकदको मूर्ति सहित बगैंचा तिनाउ, पाल्पा

✓ रिहार दह क्षेत्रको संरक्षण तथा पूर्वाधार विकास, दाङ्ग

सचिव



- ✓ पाल्पा दरबारमा प्रादेशिक संग्रहालय निर्माण, पाल्पा
- ✓ घुइयास्थान थारु संस्कृति संरक्षण पुर्वाधार निर्माण, दाङ्ग
- ✓ स्थापित रामापिथेकस बोटानिकल गार्डेनमा पूर्वाधार निर्माण, रुपन्देही
- ✓ हिलपार्कमा पुर्वाधार विकास ,रुपन्हेही
- ✓ मणिमुकुन्द सेन पार्क पुर्वाधार विकास, रुपन्हेही
- ✓ खाँचीकोट दरवार संरक्षण र विकास,सन्धीखर्क अर्घाखाँची
- ✓ रानीमहल इको पार्क निर्माण, पाल्पा
- ✓ पुरनधारा झरनामा पूर्वाधार निर्माण, दाङ्ग
- ✓ श्रीनगर पाल्पामा सांस्कृतिक डबली निर्माण
- ✓ दाङ्गको घोरदौरामा सांस्कृतिक डबली निर्माण
- ✓ वर्दिया ठाकुरद्वारामा थारु सांस्कृतिक डबली/खुलानाटयघर निर्माण
- ✓ धारापानी धार्मिक क्षेत्रमा पार्क सहित भौतिक निर्माण, दाङ्ग
- ✓ जितगढी किल्ला संरक्षण तथा पुर्वाधार निर्माण, रुपन्देही
- ✓ थवाङग युद्ध स्मारक तथा संग्रालय निर्माण, रोल्पा
- ✓ रुकमको टकसेरामा पर्यटकीय गन्तव्यको रूपमा बिकास गर्ने
- ✓ दंगीशरण थारु Cultural Villageतथा पार्क निर्माण, दाङ्ग
- ✓ जगदिशपुर तालमा चरा अवलोकन बहुउद्देश्य भवन र टावर निर्माण तथा Biodiversity Educational Gardenस्थापना, कपिलवस्तु
- ✓ गजेडीदानपुर ताल पुर्वाधार विकास,रुपन्देही
- ✓ मानसरोवरको प्रतिकात्मक स्थल सहित बोटानिकल गार्डेन निर्माण, बाँके
- ✓ Multipurpose वोटानिकल गार्डेन निर्माण घोराही, दाङ्ग
- ✓ बाह्रकुने दहमा वहु उद्देश्य पार्क निर्माण, दाङ्ग
- ✓ वन वाटिका बोटानिकल गार्डेन पुर्वाधार विकास तिलोत्तमा, रुपन्देही
- ✓ रामापिथेकस जुलिजकल पार्क निर्माण, रुपन्देही
- ✓ बोटानिकल गार्डेन निर्माण तुल्सीपुर, दाङ्ग
- ✓ संस्कृत विश्वविद्यालयको सहकार्यमा जडिवुटी वाटिका स्थापना, इस्मा गुल्मी

## २. सम्भाव्यता अध्ययन/ विस्तृत अध्ययन/गुरु योजना निर्माण

- अध्ययन गरिने क्रियाकलापहरुका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,






सचिव

- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,
- सेवा प्रदायक मार्फत गरिने क्रियाकलापहरु देहाय वमोजिम हुनेछन।
  - ✓ पाल्पा भैरबस्थान मन्दिर गुरुयोजना निर्माण
  - ✓ शहिद चुनमाया पार्कको गुरुयोजना, पाल्पा
  - ✓ शिवगढी मन्दिर क्षेत्र संरक्षण तथा सौन्दर्यिकरणको गुरुयोजना निर्माण, कपिलवस्तु
  - ✓ जितगढी किल्ला गुरुयोजना निर्माण
  - ✓ वुद्धकालीन प्राचिन कोलिया सभ्यता देखाउने नमूना वस्तीको गुरुयोजना, कपिलवस्तु
  - ✓ इस्माकोट, पौदी अमराइकोट, वामीकोटको पुरातात्विक बस्तुहरुको संरक्षण तथा विकासको गुरुयोजना निर्माण, गुल्मी
  - ✓ मदरबाबा पर्यटकीय धार्मीक स्थलको गुरु योजना निर्माण, नवलपरासी
  - ✓ पर्यटकीय क्षेत्र चमेरे गुफाको गुरु योजना, दाङ्ग

३. प्रादेशिक पर्यटन सम्बन्धी ऐन कानून निर्माण

- यो कृयाकलाप मन्त्रालय मार्फत सञ्चालन गरिने
- कानून सम्बन्धी प्रारम्भिक मस्यौंदा तयार गरी विज्ञहरु संग परामर्श र सरोकारवालाहरु संग अन्तरक्रिया तथा छलफल गरी कानूनको तर्जुमा गर्ने ।

४. ठूला सडक सौन्दर्यीकरण विरुवा रोपण अनुदान

- सम्बन्धित स्थानीय तह संग समन्वय गरी फिल्ड सर्भे गर्ने
- रोपण गर्ने प्रजातिहरु छनौट गर्ने
- सम्बन्धित पालिकाहरुको सिफारिसमा स्थानीय जनताहरुको संलग्नतामा सडक छेउमा शोभनीय रुखजन्य विरुवा रोपण गर्नका लागी प्रति विरुवा रु १००/- का दरले अनुदान दिने,
- रोपण गरिएका विरुवाहरुको संरक्षणका लागी आवश्यक पर्ने कार्यहरु समेत गर्ने ।

६. गुरुयोजना /संभाब्यता अध्ययन तथा निर्माण कार्य जस्ता कृयाकलापहरु

✓ कपिलधाम गुरुयोजना निर्माण तथा सिमसार क्षेत्रको विकास तथा सौन्दर्यकर कपिलवस्तु गुरुयोजनाः

- अध्ययन गरिने क्रियाकलापहरुका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेपज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्वन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विपयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,




सचिव

- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

**सिमसार क्षेत्रको विकास तथा सौन्दर्यिकरणः**

- अख्तियार प्राप्त निकायबाट सम्बन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- लागत अनुमान तयार गर्ने कार्य सम्बन्धित कार्यालयमा प्राविधिक कर्मचारी नभएको अवस्थामा जिल्ला स्थित भौतिक पुर्वाधार विकास मन्त्रालयको मातहतको निकाय निकाय वा स्थानीय तहका प्राविधिक मार्फत गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,
- प्रचलित कानून वमोजिम उपभोक्ता समूहबाट संचालन हुन सक्ने भए प्रचलित कानून वमोजिम उपभोक्ता समिति गठन गरी कार्य संचालन गर्न सकिने,
- सम्बन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयबाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरि सम्वन्धित निर्माण ब्यवसायी वा उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,

✓ **नुवाकोट गढी पर्यटन क्षेत्र व्यवस्थापन गुरु योजना निर्माण तथा खुला नाट्यघरको पुर्वाधारको शुरुवात**

**गुरुयोजनाः**

- अध्ययन गरिने क्रियाकलापहरुका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

**खुला नाट्यघरको पुर्वाधार निर्माणः**

- अख्तियार प्राप्त निकायवाट सम्बन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- लागत अनुमान तयार गर्ने कार्य सम्बन्धित कार्यालयमा प्राविधिक कर्मचारी नभएको अवस्थामा जिल्ला स्थित भौतिक पुर्वाधार विकास मन्त्रालयको मातहतको निकाय निकाय वा स्थानीय तहका प्राविधिक मार्फत गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,




सचिव

- प्रचलित कानून वमोजिम उपभोक्ता समूहबाट संचालन हुन सक्ने भए प्रचलित कानून वमोजिम उपभोक्ता समिति गठन गरी कार्य संचालन गर्न सकिने,
- सम्बन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयबाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरि सम्बन्धित निर्माण व्यवसायी वा उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,

✓ **रुरु धार्मिक पर्यटकीय क्षेत्र व्यवस्थापन सम्बन्धी विस्तृत अध्ययन तथा कार्य शुरु**

**विस्तृत अध्ययनः**

- अध्ययन गरिने क्रियाकलापहरुका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्वन्धित निकायमा पेश गर्ने,

**पुर्वाधार निर्माणः**

- अख्तियार प्राप्त निकायबाट सम्वन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- लागत अनुमान तयार गर्ने कार्य सम्बन्धित कार्यालयमा प्राविधिक कर्मचारी नभएको अवस्थामा जिल्ला स्थित भौतिक पुर्वाधार विकास मन्त्रालयको मातहतको निकाय निकाय वा स्थानीय तहका प्राविधिक मार्फत गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,
- प्रचलित कानून वमोजिम उपभोक्ता समूहबाट संचालन हुन सक्ने भए प्रचलित कानून वमोजिम उपभोक्ता समिति गठन गरी कार्य संचालन गर्न सकिने,
- सम्वन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयबाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरि सम्बन्धित निर्माण व्यवसायी वा उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,

✓ **स्वर्गद्धारी मन्दिर परिषरमा भौतिक पूर्वाधार निर्माण तथा केवलकार सञ्चालनको संभाव्यता अध्ययन प्युठान**

**पुर्वाधार निर्माणः**

- अख्तियार प्राप्त निकायवाट सम्वन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,

प्रदेश सरकार उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय प्रदेश नं.५ बुटवल, नेपाल

सचिव

- लागत अनुमान तयार गर्ने कार्य सम्बन्धित कार्यालयमा प्राविधिक कर्मचारी नभएको अवस्थामा जिल्ला स्थित भौतिक पुर्वाधार विकास मन्त्रालयको मातहतको निकाय निकाय वा स्थानीय तहका प्राविधिक मार्फत गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,
- प्रचलित कानून वमोजिम उपभोक्ता समूहबाट संचालन हुन सक्ने भए प्रचलित कानून वमोजिम उपभोक्ता समिति गठन गरी कार्य संचालन गर्न सकिने,
- सम्वन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयवाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरि सम्वन्धित निर्माण ब्यवसायी वा उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,

केवलकारको सम्भाब्यता अध्ययन

- अध्ययन गरिने क्रियाकलापहरुका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्वन्धित विपय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्वन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्वन्धित निकायमा पेश गर्ने,




सचिव

## परिच्छेद ६

## उद्योग

**१. वन पैदावार र कृषि वनमा आधारित उधमीहरुका लागि तालिम**

यो कार्यक्रम घरेलु तथा साना उद्योग कार्यालय /घरेलु तथा साना उद्योग विकास समितिबाट संचालन हुनेछ । कार्यक्रम कार्यान्वयनको लागि

- स्थानीय तहसँग समन्वय गरी प्रशिक्षार्थीहरुबाट माग संकलन गर्ने,
- तालिमको प्रचलित नोम्स् अनुसार लागत अनुमान तयार गर्ने,
- स्थानीयतहको वन तथा कृषि शाखाहरुसंगको समन्वयमा प्रशिक्षार्थी छनौट गर्ने,
- छनौट भएका विषय अनुसारका प्रशिक्षकहरुको व्यवस्था गर्ने,
- प्रारम्भिक रुपमा उद्यमशिलता तालिम सञ्चालन गर्ने,
- उद्यमशिलता तालिम पश्चात प्रशिक्षार्थीको मागको आधारमा सीप विकास तालीम दिने। (छोटो/मध्यम/लामो अवधीको)
- तालिम संचालन पश्चात प्रतिवेदन तयार गर्ने ।

**२. विपन्नमुखी आयमूलक सीप विकास तालिम**

यो कार्यक्रम घरेलु तथा साना उद्योग कार्यालय /घरेलु तथा साना उद्योग विकास समितिबाट संचालन हुनेछ । कार्यक्रम कार्यान्वयनकोलागि

- स्थानीय तहसँग समन्वय गरी प्रशिक्षार्थीहरुबाट माग संकलन गर्ने,
- तालिमको प्रचलित नोम्स् अनुसार लागत अनुमान तयार गर्ने,
- विपन्न वर्गलाइ लक्षित गरेर आयमूलक हुने खालका तालिमका विषयवस्तु छनौट गर्ने,
- स्थानीयतहको समन्वयमा प्रशिक्षार्थी छनौट गर्ने र प्रशिक्षकको व्यवस्था गर्ने,
- उद्यमशिलत तालिम पश्चात प्रशिक्षार्थीको मागको आधारमा सीप विकास तालीम दिने, (छोटो/मध्यम/लामो अवधीको)
- तालिम संचालन पश्चात प्रतिवेदन तयार गर्ने ।

**३. आयात प्रतिस्थापन निर्यात प्रवर्धन तथा तुलनात्मक लाभको उधोगहरुको सम्भाव्य अध्ययन**

- सम्भाव्यता अध्ययनका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त Terms Of Reference-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्वन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विपयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,




सचिव

- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

३. खानी तथा खनिज पदार्थसम्वन्धी विस्तृत अध्ययन

- खानी तथा खनिज पदार्थ सम्वन्धी विस्तृत अध्ययन-DPR लागि अख्तियार प्राप्त निकायहरुवाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्वन्धित निकायमा पेश गर्ने,

५. गरिवी निवारणकालागि लघु उद्यम विकास कार्यक्रम

मन्त्रालयबाट गरिवी निवारणका लागि लघु उद्यम विकास कार्यक्रम सञ्चालनका लागि सेवा प्रदायक संस्था छनोटका लागि हुने कार्यहरु र कार्यक्रम अनुगमन लगाएतका कृयाकलापमा बजेट खर्च गर्न सकिनेछ। ।कार्यक्रम कार्यान्वयनको लागि नेपाल सरकारवाट सशर्त अनुदानको कार्यक्रम सञ्चालनको लागि छनौट गरिएका सेवा प्रदायक संस्थाहरुबाट जिल्लालाई छुट्याईएको बजेटबाट थप लघु उद्यमी सिर्जना तथा आवश्यकता अनुसार लघु उद्यम स्तरोन्नति सम्बन्धी क्रियाकलाप घरेलु तथा साना उद्योग कार्यालय र घरेलु तथा साना उद्योग विकास समितिबाट सञ्चालन गरिनेछ।

६. घरेलु तथा साना उद्योग विकास कार्यक्रम

यो कार्यक्रम घरेलु तथा साना उद्योग कार्यालय /घरेलु तथा साना उद्योग विकास समितिबाट संचालन हुनेछ । कार्यक्रम कार्यान्वयनको लागि

- स्थानिय तहसँग समन्वय गरी प्रशिक्षार्थीहरुबाट माग संकलन गर्ने,
- तालिमको प्रचलित नर्म्स्अनुसार लागत अनुमान तयार गर्ने,
- विपन्न वर्गलाइ लक्षित गरेर आयमूलक हुने खालका घरेलु तथा साना उद्योग सम्बन्धी तालिमका विषयवस्तु छनौट गर्ने,
- स्थानीयतहकोसमन्वयमा प्रशिक्षार्थी छनौट गर्ने र प्रशिक्षकको व्यवस्था गर्ने,
- उद्यमशिलत तालिम पश्चात प्रशिक्षार्थीको मागको आधारमा सीप विकास तालीम दिने (छोटो/मध्यम/लामो अवधीको),
- तालिम संचालन पश्चात प्रतिवेदन तयार गर्ने ।




सचिव

७. चिउरी घ्यु उद्योग स्थापनाका लागी डिपिआर निर्माण, अर्घाखाँची

- चिउरी घ्यु उद्योग स्थापनाका लागी लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

८. ढुंगा बालुवा स्लेट खानी क्षेत्रको संभाव्यता अध्ययन।

- ढुंगा बालुवा स्लेटखानी क्षेत्रको संभाव्यता अध्ययनका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फतसेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

९. प्रदेशमा संचालनमा रहेका उद्योगहरुको निरीक्षण तथा प्रतिवेदन

- संचालनमा रहेका उद्योगहरुको लगत संकलन गर्ने तथा प्रकृति अनुसार वर्गीकरण गर्ने,
- अनुगमन तथा निरीक्षण कार्ययोजना तयार गरी निरीक्षण तथा अनुगमन गर्ने,
- आवश्यक्ता अनुसार लिखित तथा मौखिक निर्देशन दिने,
- निरीक्षण अनुगमनको प्रतिवेदन तयार गरी सम्बन्धित निकायमा पेश गर्ने।

१० प्रदेशस्तरीय जडीबुटी संकलन तथा प्रशोधन केन्द्र स्थापनाका लागि संभाव्यता अध्ययन

- जडिवुटी संकलन केन्द्र स्थापनाकोलागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फतसेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्वन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने ।




सचिव

११. प्रादेशिक औद्योगिक व्यवसाय ऐन कानून तर्जुमा

- यो कृयाकलाप मन्त्रालय मार्फत सञ्चालन गरिने
- कानून सम्बन्धी प्रारम्भिक मस्यौंदा तयार गरी विज्ञहरु संग परामर्श र सरोकारवालाहरु संग अन्तरक्रिया तथा छलफल गरी कानूनको तर्जुमा गर्ने ।

१२ स्थानीय तह उद्यम विकास

यो कार्यक्रम घरेलु तथा साना उद्योग कार्यालय/घरेलु तथा साना उद्योग विकास समितिबाट संचालन हुनेछ । कार्यक्रम कार्यान्वयनको लागि

- स्थानिय तहसँग समन्वय गरी प्रशिक्षार्थीहरुबाट माग संकलन गर्ने,
- तालिमको प्रचलित नम्स् अनुसार लागत अनुमान तयार गर्ने,
- विपन्न वर्गलाइ लक्षित गरेर स्थानीय तहमै उद्यम विकास हुने खालका घरेलु तथा साना उद्योग सम्बन्धी तालिमका विषयवस्तु छनौट गर्ने,
- स्थानीयतहको समन्वयमा प्रशिक्षार्थी छनौटगर्ने र प्रशिक्षकको व्यवस्था गर्ने,
- उद्यमशिलत तालिम पश्चात प्रशिक्षार्थीको मागमा आधारित घरेलु तथा साना उद्योग विकास तालीमदिने। (छोटो/मध्यम/लामो अवधीको)
- तालिम संचालन पश्चात प्रतिवेदन तयार गर्ने ।

१३. स्थानीय तह संगको सहकार्यमा एक स्थानीय तह एक औद्योगिक ग्रामको स्थापना गर्न सम्भाव्यता अध्ययन

- प्रत्येक स्थानीय तहमा कम्तिमा एक औद्योगिक ग्राम स्थापनाका लागी अख्तियार प्राप्त निकायहरुबाट सम्वन्धित विषय विशेपज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्वन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्वन्धित निकायमा पेश गर्ने,

१४. उत्कृष्ट उद्यमी सम्मान कार्यक्रम-विभिन्न विधामा

उत्कृष्ट उद्यमी छनौटका लागि उपयुक्त मापदण्ड तयार गरी विभिन्न विधाका उद्यमीहरुलाई सम्मान गर्ने ।

१५. घरेलु उत्पादनहरुको प्रदर्शनी तथा विक्री केन्द्र निमार्ण (४ उपमहानगरपालिका)

- स्थानीय तह, स्थानीय प्रशासन, उद्योग तथा ब्यापारिक क्षेत्रका संघ संस्थाहरुसंग समन्वय गरी स्थान छनौट तथा जग्गा प्राप्ती गर्ने,

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय प्रदेश सरकार प्रदेश नं.५ बुटवल, नेपाल

सचिव

- अख्तियार प्राप्त निकायबाट सम्बन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- डिजाइन तथा लागत अनुमान तयार गर्दा सम्वन्धित स्थानीय तह तथा स्थानीय सरोकारवालाहरुको माग र आवश्यकताको आधारमा गर्ने,
- प्रचलित कानून वमोजिम निर्माण कार्य गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,
- सम्बन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयबाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन गरी सम्बन्धित निर्माण व्यवसायी/उपभोक्ता समितिलाई पृष्ठपोषण उपलब्ध गराउने,
- निर्माण पश्चात सम्बन्धित स्थानीय तहलाइ संरक्षण तथा व्यवस्थापनका लागी हस्तान्तरण गर्ने ।

१६. अदुवा प्रशोधन उद्योगको सम्भाव्यता अध्ययन निस्दी ५/पूर्वखोला ३ तथा पुर्वाधार निर्माण पाल्पा

- अदुवा प्रशोधन उद्योग स्थापनाका लागी अख्तियार प्राप्त निकायवाट सम्वन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरीसम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्वन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायकले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्वन्धित निकायमा पेश गर्ने,
- अध्ययन प्रतिवेदन तयारी पश्चात प्रचलित कानून वमोजिम प्रशोधन केन्द्रको निर्माण कार्य गर्ने,
- निर्माण पश्चात सम्वन्धीत स्थानीय तह/समुहलाई संरक्षण तथा व्यवस्थापनका लागी हस्तान्तरण अगर्ने ।

१७. नन्दीखोला हल्दी प्रशोधन केन्द्र भवन निर्माण, रोल्पा

- स्थानीय तहसंग समन्वय गरी हल्दी प्रशोधन केन्द्र स्थापनाका लागी स्थान छनौट तथा जग्गा प्राप्ती गर्ने,
- अख्तियार प्राप्त निकायबाट सम्वन्धित विशेषज्ञ तथा प्राविधिकहरुको सहयोगमा स्थलगत अवलोकन गरी डिजाइन तथा लागत अनुमान तयार गर्ने,
- डिजाइन तथा लागत अनुमान तयार गर्दा सम्वन्धित स्थानीय तह तथा स्थानीय सरोकारवालाहरुको माग र आवश्यकताको आधारमा गर्ने,
- प्रचलित कानून वमोजिम निर्माण कार्य गर्ने,
- कार्यक्रमहरुको सम्झौता गर्दा कामको परिमाण, न्यून लागत, समय सिमा, गुणस्तर जस्ता सुचक समावेस गरी गर्ने,

उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय
प्रदेश सरकार
प्रदेश नं.५
बुटवल, नेपाल

सचिव

- सम्बन्धित कार्यालय, प्राविधिक तथा मन्त्रालयबाट संचालित कार्यक्रमहरुको आवश्यकता अनुसार अनुगमन अनुगमन गरी सम्बन्धित निर्माण व्यवसायीलाई पृष्ठपोषण उपलब्ध गराउने,
- निर्माण पश्चात सम्बन्धीत स्थानीय तह/समुहलाइ संरक्षण तथा व्यवस्थापनका लागी हस्तान्तरण गर्ने ।

१८. नौवस्ता औद्योगिक क्षेत्रमा पूर्वाधार विकास

यो कार्यक्रम बाँके जिल्लामा मन्त्रालय मार्फत संचालन गरिने छ ।

- संघीय सरकारसँग समन्वय गरी नौवस्ता औद्योगिक क्षेत्रमा आवश्यक पर्ने संरचानाको एकिन गर्ने,
- कार्यक्रम संचालनक लागी नेपाल सरकार, प्रदेश सरकार तथा औद्योगिक क्षेत्र व्यवस्थापन समितिको भूमिका सहितको मोडालिटि तयार गर्ने,
- निर्माण गर्ने पूर्वाधारको पहिचान गर्ने,
- भौतिक पूर्वाधार विकास मन्त्रालयको सहयोगमा ड्रइङ्ग, डिजाईन तथा लागत अनुमान तयार गर्ने,
- सार्वजनिक खरिद ऐन तथा नियमावली बमोजिम पहिचान भएका पूर्वाधारहरुको निर्माण कार्य सञ्चालन गर्ने ।

१९. वन पैदावारमा आधारित उद्योग स्थापना

- वन पैदावारसंग सम्वन्धित लघु उद्यमीहरुको पहिचान गर्ने,
- स्थानीय तह तथा सम्वन्धित वन कार्यालयहरुसंग समन्वय गरी स्थान छनौट गर्ने,
- कार्यालयले मापदण्ड तयार गरी उद्योग स्थापनाका लागी अनुदान दिने,
- उद्यमीहरुको उद्योगको स्थापनाकोलागि कम्तिमा ३० प्रतिशत रकम र प्रदेश सरकारको ७० प्रतिशत रकम अनुदान स्वरुप प्राप्त हुनेछ ।
- जग्गा खरिद /व्यवस्थापन सञ्चालन खर्चका लागि उद्यमीहरुले लगानी गर्नुपर्ने र अनुदान प्राप्त भएको रकमवाट मेशीनरी औजार लगाएतका बस्तु सेवा प्राप्त गर्न र प्राप्त हुने रकमबाट बढीमा ५० प्रतिशत भवन निर्माणमा खर्च गर्न सकिनेछ ।
- अनुदान प्राप्त रकम कार्य प्रगतिको आधारमा प्रथम किस्ता ४० प्रतिशत, दोश्रो किस्ता ६० प्रतिशत उपलव्ध हुनेछ ।

२०. आयात प्रतिस्थापनकालागि कृषि पैदावारबाट संचालन हुन सक्ने कागज कारखाना उद्योग स्थापनाको सम्भाव्यता अध्ययन

- आयात प्रतिस्थापनका लागि कृषि पैदावारवाट संचालन हुन सक्ने कागज कारखाना उद्योग स्थापनाको सम्भाव्यता अध्ययन लागि अख्तियार प्राप्त निकायहरुवाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फत सेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,




सचिव

- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायक संस्थाले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने,

२१. **संघसंगको समन्वयमा बर्दिया दाङ्ग कपिलवस्तुमा आर्थिक कोरिडोर सम्भाव्यता अध्ययन**

- बर्दिया दाङ्ग कपिलवस्तुमा आर्थिक कोरिडोर सम्भाव्यता अध्ययनका लागि अख्तियार प्राप्त निकायहरुबाट सम्बन्धित विषय विशेषज्ञहरुको सहयोगमा संघीय सरकार वा मातहतका सम्बन्धित निकाय तथा स्थानीय तहसँग समन्वय गरी कार्य शर्त-TOR तयार गर्ने,
- अध्ययन कार्य गर्नका लागि सूचना आव्हान मार्फतसेवा प्रदायक छनौट गरी सम्झौता गर्ने,
- सम्झौता पश्चात सम्बन्धित कार्यालय, स्थानीय तह तथा सरोकारवालाहरुको प्रत्यक्ष संलग्नतामा सम्बन्धित विषयमा सेवा प्रदायक संस्था मार्फत TOR वमोजिम विस्तृत अध्ययन गर्ने,
- सेवा प्रदायक संस्थाले प्रारम्भिक प्रतिवेदनको प्रस्तुतीकरण मार्फत उठेका सवालहरुलाई समावेश गरी सो प्रतिवेदनलाई अन्तिम रुप दिई सम्बन्धित निकायमा पेश गर्ने ।

२२. कृषिवनमा आधारित उद्यमलाइ अनुदान

- अनुदान सम्बन्धी मापदण्ड तयार गर्ने,
- नयाँ मापदण्ड नबने सम्मको लागि प्रचलित संघीय कार्यविधि अनुसार उद्यमीलाइ अनुदान कार्यक्रम संचालन गर्ने ।

सचिव



# परिच्छेद ७

## वाणिज्य तथा आपूर्ति

१. उपभोक्ता जागरण अभियान

- सरोकारवाला (स्थानीय तह, उद्योग वाणिज्य सम्वन्धी संघ संस्था, उपभोक्ता हित सम्बन्धी संघ संस्था, तथा विषयगत कार्यालयहरु आदि) वीच उपभोक्ता जागरण सम्बन्धी अन्तरक्रिया तथा गोष्ठि संचालन गर्ने,
- विद्यालय तहमा पनि उपभोक्ता जागरण सम्वन्धी कार्यक्रम संचालन गर्न सकिने,
- स्थानीय संचार माध्यम मार्फत प्रचार/प्रसार गर्ने
- होडिङ्ग वोर्ड ब्रोसर तथा पम्पलेटहरुको छपाई तथा वितरण गर्ने
- सम्पन्न कार्यहरुको प्रतिवेदनतयार गर्ने ।

२. उपभोक्ता हकहितका लागि अदालत गठन

कानून बमोजिम उपभोक्ता अदालत गठन हुने ।

३. प्रदेशमा संचालनमा रहेका पेट्रोल पम्पहरुको मापदण्ड अनुगमन तथा निरीक्षण

- मन्त्रालय तथा उद्योग, वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालयले समय समयमा प्रदेशमा रहेका पेट्रोल पम्पहरुको सरोकारवाला निकायहरुको टोली सहित अनुगमन तथा निरिक्षण गर्ने,
- आवश्यकता अनुसार लिखित तथा मौखिक निर्देशन दिने,
- अनुगमन प्रतिवेदन तयार गर्ने ।

४. प्रादेशिक वाणिज्य तथा आपूर्ति सम्बन्धी ऐन कानून तर्जुमा

- कानून सम्वन्धी प्रारम्भिक मस्यौंदा तयार गर्नकालागि वैठक तथा मस्यौदामाथि विज्ञहरु संग परामर्श र सरोकारवालाहरु संग अन्तरक्रिया तथा छलफल गरी कानूनको तर्जुमा गर्ने ।

५ स्थानीय उत्पादनको बजार प्रवर्द्धनका लागि व्यापार मेला संचालन

यो कार्यक्रम जिल्लास्थित घरेलु तथा साना उद्योग कार्यालय/घरेलु तथा साना उद्योग विकास समिति बाट सञ्चालन हुन्छ । यो कृयाकलाप सञ्चालनको लागि

- जिल्लामा सञ्चालन हुने व्यापार मेलाहरुमा स्थानीय उत्पादन तथा लघु उद्यमहरुको प्रर्वद्धन हुनेगरी उद्योगीहरुलाइ सहयोग पुग्ने गरी आयोजकहरु सँग समन्वय गरी आवश्यकता अनुसार सहयोग गर्ने ।




सचिव

६.स्थानीय तहसंगको सहकार्यमा बजार अनुगमन

- सम्वन्धित कार्यालयले अनुगमन तालिका तयार गर्ने,
- मन्त्रालय, उद्योग वाणिज्य तथा उपभोक्ता हित संरक्षण निर्देशनालय स्थानीय तह, जिल्ला प्रशासन कार्यालय, प्रहरी कार्यालय लगायतको समन्वय तथा अन्य सरोकारवाला निकायको समेत सहभागितामा वजार अनुगमन गर्ने,
- आवश्यकता अनुसार लिखित तथा मौखिक निर्देशन दिइ अनुगमन प्रतिवेदन तयार गर्ने ।

७.खाद्य वस्तुको गुणस्तर मापन प्रयोगशाला स्थापना

खाद्यवस्तुको गुणस्तर मापन प्रयोगशाला स्थापना गर्ने कार्य भौतिक पुर्वाधार विकास मन्त्रालय मार्फत संचालन गरिने छ ।

- स्थानीय तह, उद्योग वाणिज्य तथा व्यापारिक संघ सस्था, उपभोक्ता हित संरक्षण सम्वन्धी संस्था तथा सरोकारवाला कार्यालयहरु (घरेलु तथा साना उद्योग कार्याल, वाणिज्य कार्यालय, तथा खाद्य प्रविधि तथा गुण नियन्त्रण कार्यालय, प्रादेशिक भूमि व्यवस्था, कृपि तथा सहकारी मन्त्रालय) संग समन्वय गरी रुपन्देही जिल्लामा स्थान छनोट गर्ने,
- भौतिक पूर्वाधार विकास मन्त्रालय तथा सम्वन्धित खाद्य तथा रसायन विज्ञहरुविच परामर्श गरी डिजाइन तथा लागत अनुमान गर्ने,
- प्रचलित कानून वमोजिम निर्माण कार्य गरिने ।

सचिव

